॥ श्रीहरिः ॥

2094

# गीता-माधुर्य

(नेपाली)






स्वामी रामसुखदास

2094

# गीता-माधुर्य

(नेपाली)

॥ श्रीहरिः ॥



गीताप्रेस पुस्तक बिक्री केन्द्र
पसल नं ६,७,८, माधवराज सुमार्गी भवन, वनकाली
पशुपति क्षेत्र, काठमाडौं, नेपाल

त्वमेव माता च पिता त्वमेव
त्वमेव बन्धुश्च सखा त्वमेव।
त्वमेव विद्या द्रविणं त्वमेव
त्वमेव सर्वं मम देवदेव॥

स्वामी रामसुखदास

नेपाली अनुवादक : आचार्य लक्ष्मण भण्डारी

सं० २०७४ प्रथम संस्करण ३,०००

❖ मूल्य—
भारतीय—₹ १५ ( पंद्रह रुपये )
नेपाली—रु० २५ ( पचीस रुपये )

प्रकाशक एवं मुद्रक—
गीताप्रेस, गोरखपुर—२७३००५
( गोबिन्दभवन-कार्यालय, कोलकाता का संस्थान )
फोन : ( ०५५१ ) २३३४७२१, २३३१२५० ; फैक्स : ( ०५५१ ) २३३६९९७
web : gitapress.org e-mail : booksales@gitapress.org
गीताप्रेस प्रकाशन gitapressbookshop. in से online खरीदें।

॥ श्रीहरिः ॥

# नम्र निवेदन

श्रीमद्भगवद्‌गीता मनुष्यमात्रलाई सही बाटो देखाउने सार्वभौम महाग्रन्थ हो। मानिसहरूबीच यसको धेरैभन्दा धेरै प्रचार होस् भन्ने दृष्टिले परम श्रद्धेय स्वामी श्रीरामसुखदासजी महाराजले यस ग्रन्थलाई प्रश्नोत्तर—शैलीमा निकै सरल ढङ्गले प्रस्तुत गर्नुभएको छ, जसले गर्दा गीता पढ्नका लागि सर्वसाधारणमा रुचि पैदा होओस् र उनीहरूले यसको अर्थलाई सजिलो गरी बुझ्न सकून्। नित्य पाठ गर्नका लागि पनि यो पुस्तक निकै उपयोगी छ।

पाठकसित मेरो निवेदन के छ भने यस पुस्तकलाई आफूले पनि पढ्नुस् र आफ्ना साथीभाइ, सँगीसम्बन्धी आदिलाई पनि पढ्नका लागि प्रेरित गर्नुस्।

**—प्रकाशक**

॥ श्रीहरिः ॥

# प्रस्तावना

श्रीमद्भगवद्गीता भारतीय ज्ञानगरिमारूपी अभिव्यक्तिको अमूल्यनिधि हो। भगवान् कृष्णका मुखारविन्दबाट निःसृत यो गीता सारस्वतरससारसरोवरसमुद्भूत सुमधुर सद्भाव हो। यति मात्र होइन, अखण्ड ज्ञानपारावारप्रसूता लौकिक प्रभाभासुर दिव्यालोक हो। यस भीषण भवाटवीमा अन्तहीन यात्राका पथिक यायावर प्राणीका लागि यो अनुपम मधुर पाथेय छ। ज्ञानभाण्डागार उपनिषद्हरूको यो सारसर्वस्व हो। प्रस्थानत्रयीमा प्रतिष्ठापित यो गीता मननपथमानीयमान भएर भग्नावरणचिद्विशिष्ट वेद्यान्तरसम्पर्कशून्य अपूर्व आनन्दोपलब्धिको साधिका हो। यो मानसिक मलापनयनपुरःसर मनको शिवसङ्कल्पापादिका हो। कर्म, अकर्म र विकर्मको व्याख्या गर्ने यो गीताले चित्तलाई आह्लादित तुल्याउँछ, नैराश्य निहारलाई टाढा हटाई कर्मवादको उपदेश प्रदान गर्दछ।

यसको महनीयता यही कुराबाट व्यक्त हुन्छ कि जति व्याख्या गीताको भएको छ, त्यति व्याख्या आजसम्म अन्य कुनै पनि ग्रन्थको भएको छैन। यो विश्वविश्रुत भारतीय संस्कृतिको अक्षय भण्डार हो। तत्त्वबुभुत्सुहरूका लागि कल्याणमार्गोपदेशिका गीता सबैतिर समादृत छ।

गीताका अनेक व्याख्या छन्, तर तीमध्ये श्रद्धेय स्वामी रामसुखदासजी महाराजद्वारा लिखित साधक—संजीवनी व्याख्याको आफ्नै विशिष्ट स्थान छ। गीताको गम्भीर हार्दिकता व्यक्त गर्ने यो व्याख्याले गम्भीरभन्दा गम्भीर भावलाई पनि अति सरलतासाथ व्यक्त गर्दछ। गीताको रहस्यका जिज्ञासुले साधक संजीवनीको अध्ययन अवश्य गनुपर्दछ।

स्वामी रामसुखदासजी महाराज एक विलक्षण सन्त हुनुहुन्छ। वैषयिक सम्पर्कशून्य उहाँले गीतालाई आत्मसात् गर्नुभएको छ। मानवमात्रको कल्याणका लागि उहाँले 'गीता माधुर्य' नामक पुस्तकको रचना गर्नुभएको छ। यो पुस्तक प्रश्नोत्तरशैलीमा लेखिएको छ। प्रश्नोत्तर प्रणालीमा पुस्तक लेख्ने परम्परा निकै पुरानो हो। व्याकरण शास्त्रका महान् आचार्य पतञ्जलिले अष्टाध्यायीमाथि जुन महाभाष्य लेख्नुभएको छ, त्यो प्रश्नोत्तर प्रणालीमै लेख्नुभएको छ। नवाह्निक महाभाष्यको सुरुआत गर्दै उहाँले लेख्नुहुन्छ :

**अथ शब्दानुशासनम्।**

**केषां शब्दानाम्।**

**वैदिकानां लौकिकानाञ्च।**

**अथ शब्दानुशासनस्य कानि प्रयोजनानि!**

**रक्षोहालध्वसन्देहाः प्रयोजनानि॥**

यसप्रकार, सरल शब्दमा आठै अध्यायको अष्टाध्यायीको व्याख्या पतञ्जलिद्वारा प्रश्नोत्तरशैलीमा गरिएको छ, जुन निकै उपयोगी छ।

स्वामीजीले पनि यही पुरातनशैलीलाई आधार बनाएर गीता—माधुर्यलाई प्रश्नोत्तरशैलीमा लेख्नुभएको छ। गीताका प्रत्येक श्लोकलाई राम्रोसित बुझ्नका लागि तिनमा प्रश्न र उत्तरको परिकल्पना आफैँमा एउटा अपूर्व कुरा हो। प्रश्नोत्तरका माध्यमले गीताको रहस्य बुझ्न सजिलो हुन्छ भन्ने कुरामा कुनै सन्देह छैन। गीता—माधुर्यद्वारा तत्त्व जिज्ञासुलाई जुन आनन्द उपलब्ध हुन्छ, त्यो त स्वयंसंवेद्य नै छ। गीता—माधुर्यका अनेक संस्करण तथा विभिन्न भाषामा यसको अनुवादका माध्यमले यो कुरा स्पष्ट हुन्छ। तल लेखिएको एउटा अंश उदाहरणका रूपमा पढौँ :

गीताको तेस्रो अध्यायको ३६औँ श्लोकमा अर्जुन प्रश्न गर्दछन् कि भगवान् ! मानिसले नचाहँदा नचाहँदै पनि जबर्जस्ती लगाए जसरी कसको प्रेरणाले पापको आचरण गर्दछ?

भगवान्ले भन्नुभयो—रजोगुणबाट उत्पन्न कामलाई नै तिमीले पाप गराउनेवाला ठान। यो काम कहिल्यै पनि तृप्त हुनेवाला छैन। यो महापापी छ। यसैलाई तिमीले वैरी ठान।

अर्जुन—महापापी कामले के गर्दछ?

भगवान—धुवाँले जस्तै अग्निलाई, मलले जस्तै ऐनालाई र सालले गर्भलाई ढाके जसरी नै यो कामले मानिसको विवेकलाई ढाकिदिन्छ र त्यसमार्फत नसोचेका कार्य गराउँछ।

अर्जुन—यो काम रहन्छ कहाँ?

भगवान—काम इन्द्रियहरू, मन र बुद्धि, यी तीन स्थानमा रहन्छ। यसले देहाभिमानी मानिसको ज्ञानलाई ढाकेर उसलाई मोहित गर्दछ।

अर्जुन—त्यस कामको नाश कसरी गर्न सकिन्छ?

भगवान—हे अर्जुन ! तिमीले सबैभन्दा पहिले इन्द्रियलाई वशमा गरेर यस ज्ञानविज्ञानलाई ढाकिदिने कामलाई मारिदेऊ।

यसप्रकार, प्रश्नोत्तरात्मक यो गीताको व्याख्यान सर्वजनउपयोगी छ। यस्तो विलक्षण काम गर्ने स्वामी रामसुखदासजी महाराजप्रति हामी सबै कृतज्ञ छौँ, जसले 'गीता—माधुर्य' नामक पुस्तक लेखेर सबैको महान् उपकार गर्नुभएको छ। प्रस्तुत पुस्तकको दैनिक प्रसार होस् र मानिसहरू यसबाट लाभान्वित होऊन्, यही कामनासाथ—

**विश्वनाथ मिश्र**

**पूर्वप्राचार्य, राजकीय संस्कृत कलेज, बिकानेर,**

**पूर्व विभागाध्यक्ष, जैनदर्शन जैन विश्वभारती संस्थान, लाडनुं**

॥ श्रीहरिः ॥

# विषय—अनुक्रमणिका

॥ श्रीपरमात्मने नमः ॥
श्रीगणेशाय नमः

# गीता—माधुर्य

**वासुदेवसुतं देवं कंसचाणूरमर्दनम्।**
**देवकीपरमानन्दं कृष्णं वन्दे जगद्गुरूम्॥**
**जिज्ञासापूर्तये टीका लिखिता साधकस्य या।**
**संजीवनी प्रवेशाय माधुर्य लिख्यते मया॥**

## पहिलो अध्याय

पाण्डहरूले बाह्र वर्षको वनवास र एक वर्षको अज्ञातवास समाप्त भएपछि जब पूर्वप्रतिज्ञाअनुसार आफूले पाउने आधा राज्य मागे, त्यसपछि दुर्योधनले आधा राज्य होइन, सियोको चुच्चो बराबर जमिन पनि युद्धविना दिन चाहेन। त्यसैले, पाण्डवहरूले माता कुन्तिको आदेशबमोजिम युद्ध गर्न स्वीकार गरे। यसप्रकार, पाण्डव र कौरवहरूबीच युद्ध हुने कुरा निश्चित भयो र दुवै पक्षबाट युद्धको तयारी भयो।

महर्षि वेदव्यासजीको धृतराष्ट्रमाथि विशेष स्नेह थियो। त्यही स्नेहका कारण उहाँले धृतराष्ट्रनजिक आएर 'युद्ध हुने र त्यहाँ क्षत्रियहरूको भयङ्कर संहार हुने कुरा अवश्यम्भावी छ, त्यसलाई कसैले पनि टार्न सक्दैन, यदि तिमीले युद्ध हेर्न चाहन्छौ भने मैले तिमीलाई दिव्य दृष्टि दिन सक्छु, जसले गर्दा तिमी यहीँ बसीबसी युद्धलाई राम्रोसित हेर्न सक्छौ।' भनेर भन्नुभयो। त्यसपछि धृतराष्ट्रले भने 'म आजन्म अन्धो रहेँ, अब मैले आफ्नो कुलको संहारलाई

हेर्न चाहन्नँ, तर युद्ध कसरी भएको छ, त्यो समाचार भने जान्न चाहन्छु।' व्यासजीले भन्नुभयो,'मैले सञ्जयलाई दिव्य दृष्टि प्रदान गर्दछु, जसका कारण युद्धको सम्पूर्ण घटना र सैनिकको मनमा आएको भावनासमेत उनले थाहा पाउने छन्, सुन्ने छन्, देख्ने छन् र तिमीलाई सुनाइदिने पनि छन्।' यति भनेर उहाँले सञ्जयलाई दिव्यदृष्टि प्रदान गर्नुभयो। उता निश्चित गरिएको समयअनुसार कुरूक्षेत्रमा दुवै सेनाहरू युद्धका लागि तयार थिए।

**अब प्रश्न उठ्छ, जब युद्धका लागि दुवै सेनाहरू तयार थिए भने, यस्तो अवस्थामा पनि भगवान्‌ले अर्जुनलाई गीताको उपदेश किन दिनुभयो?**

शोक हटाउनका लागि भगवान्‌ले अर्जुनलाई गीताको उपदेश दिनुभयो।

**अर्जुनलाई शोक किन भयो र कहिले भयो?**

जब अर्जुनले दुवै सेनाहरूका बीचमा आफ्ना कुलकुटुम्बका सदस्यलाई देखे र सोचे। दुवैतिर हाम्रा आफ्नै इष्टमित्र मर्ने छन् भन्ने ममताका कारण उनलाई शोक भयो।

**अर्जुनले दुवै सेनाहरूमा आफ्ना कुटुम्बीहरूलाई नै किन देखे?**

भगवान् श्रीकृष्णले जब दुवै सेनाहरूका बीचमा रथ उभ्याउनुभयो र अर्जुनसित तिमीले युद्ध गर्ने इच्छासहित जम्मा भएका यी कुरुवंशीहरूलाई हेर भनेर भन्नुभयो अनि अर्जुनले ती कुटुम्बी–हरूलाई देखे।

**भगवान्‌ले अर्जुनलाई दुवै सेनाहरूमध्ये कुरुवंशीहरूलाई हेर्न भनेर किन भन्नुभयो?**

अर्जुनले पहिल्यै भगवान्‌सित भनेका थिए,'हे अच्युत ! दुवै

सेनाहरूका बीचमा मेरो रथ उभ्याउनुस्, जसका कारण मसित युद्ध गर्नेहरू को हुन् भन्ने मलाई थाहा होस्।'

**अर्जुनले किन यसो भने?**

जब युद्धको तयारीस्वरूप बाजागाजाहरू बजे, अनि उत्साहित हुँदै अर्जुनले दुवै सेनाहरूका बीचमा रथ उभ्याउनका लागि भगवान्‌सित आग्रह गरेका थिए।

**बाजाहरू किन बजे?**

कौरवसेनाका मुख्य सेनापति भीष्मले जब सिंहगर्जनासमान आवाजमा शङ्ख बजाउनुभयो, त्यसपछि कौरव र पाण्डवसेनाका बाजाहरू बजे।

**भीष्मजीले शङ्ख किन बजाउनुभयो?**

दुर्योधनलाई खुसी पार्नका लागि भीष्मजीले शङ्ख बजाउनुभयो?

**दुर्योधन किन प्रसन्न थिएन र?**

दुर्योधनले गुरु द्रोणाचार्यसित भन्यो,'तपाईंको प्रतिपक्षमा पाण्डवसेनाहरू उभिएका छन्, हेर्नुस्। अर्थात्, जुन पाण्डवहरूप्रति तपाईंले स्नेहभाव राख्नुहुन्छ, तिनै तपाईंको विरोधमा उभिएका छन्। पाण्डवसेनाहरूको व्यूहरचना पनि धृष्टद्युम्नले गरेका छन्, जसको जन्म तपाईंलाई मार्न भनेर भएको छ।' यसप्रकार, दुर्योधनको बठ्याइँपूर्ण राजनीतिले भरिएको तिखो वचन सुनेपछि द्रोणाचार्य चुपचाप रहनुभयो, केही बोल्नुभएन। त्यसपछि दुर्योधन दुःखी भएको थियो।

**द्रोणाचार्य किन चुप लाग्नुभयो?**

दुर्योधनले द्रोणाचार्यलाई उक्साउनका लागि चलाखीपूर्ण तरिकाले राजनीतिका जुन कुरा गऱ्यो, त्यो द्रोणाचार्यलाई नराम्रो लाग्यो। उनले सोचे,'यो कुरालाई खण्डन गरेँ भने युद्धको समयमा

आपसमा खटपट हुन्छ, जुन उचित हुँदैन। मैले यो कुरालाई अनुमोदन पनि गर्न सक्दिनँ, किनकि यसले बठ्याइँका साथ यी कुरा गरेको छ, सरलतापूर्वक गरेको छैन।' यही सोचेर द्रोणाचार्य चुप लाग्नुभयो।

**दुर्योधनले यी कुरा किन र कहिले गऱ्यो?**

दुर्योधनले व्यूहाकाररूपमा उभिएका पाण्डवसेनालाई देखेर गुरु द्रोणलाई उक्साउनका लागि यस्तो कुरा भनेको थियो। यसको वर्णन सञ्जयले धृतराष्ट्रसित गरेका छन्।

**सञ्जयले यो वर्णन धृतराष्ट्रसित किन गरे?**

जब धृतराष्ट्रले युद्धको कथा सुरुदेखि सविस्तार सुन्न चाहे, तब सञ्जयले यी कुरा धृतराष्ट्रसित भने।

**धृतराष्ट्रले सञ्जयसित किन सुन्न चाहे?**

दस दिन युद्ध भएपछि सञ्जयले अचानक आएर धृतराष्ट्रसित भने,'कौरव—पाण्डवका पितामह, शान्तनुका छोरा भीष्म मारिए (रथबाट तल झारिए)। जो सम्पूर्ण योद्धाहरूमा मुख्य र सम्पूर्ण धनुर्धारीहरूमा श्रेष्ठ थिए, यस्ता पितामह भीष्म आज बाणैबाणको ओछ्यानमा परेका छन्।' यो समाचार सुनेपछि धृतराष्ट्रलाई निकै दुःख भयो, उनले निकै विलाप गर्न थाले। त्यसपछि उनले सञ्जयसित युद्धका सारा वृत्तान्त सुनाउन भन्दै प्रश्न गरे—

**हे सञ्जय! धर्मभूमि कुरुक्षेत्रमा युद्धको चाहनाले जम्मा भएका मेरा र पाण्डवका छोराहरूले के गरे?॥ १॥**

सञ्जयले भने—त्यतिखेर व्यूहरचनामार्फत तयार भएका पाण्डवहरूका सेनालाई देखेपछि राजा दुर्योधन द्रोणाचार्य भएनजिक गए र उनलाई भने,'हे आचार्य ! तपाईं आफ्नो बुद्धिमान् शिष्य द्रुपदपुत्र धृष्टद्युम्नद्वारा व्यूहरचनापछि तयारीपूर्वक राखिएका

पाण्डवका यी बोझिला सेनालाई हेर्नुस्।'॥ २-३ ॥

**दुर्योधन, पाण्डवका सेनाहरूमा मैले ककसलाई हेरूँ?**

पाण्डवका यी सेनाहरूमा ठूलाठूला शूरवीरहरू छन्, जसका निकै ठूलाठूला धनुषहरू छन्, जो बलमा भीमसमान र युद्धकलामा अर्जुनसमान छन्। यिनीहरूमा युयुधान(सात्यकि), राजा विराट र महारथी द्रुपद पनि छन्। धृष्टकेतु, चेकितान र पराक्रमी काशिराज पनि छन्। पुरुजित् र कुन्तिभोज, यी दुवै दाजुभाइ एवम् मनुष्यहरूमा श्रेष्ठ शैब्य पनि छन्। पराक्रमी युधामन्यु र बलवान् उत्तमौजा पनि छन्। सुभद्रापुत्र अभिमन्यु र द्रौपदीका पाँचै पुत्र पनि छन्। यी एकसेएक महाराथी हुन्॥ ४—६ ॥

**पाण्डवसेनाका शूरवीरहरूको नाम त तिमीले भन्यौ, तर आफ्नो सेनाका शूरवीर कोको छन्, भन न त?**

हे द्विजोत्तम ! हाम्रो सेनामा जो विशेष विशेष पुरूषहरू छन्, उनीहरूमाथि पनि ध्यान दिनुहोस्। हजुर(द्रोणाचार्य), पितामह भीष्म, कर्ण, सङ्ग्रामविजयी कृपाचार्य, अश्वत्थामा, विकर्ण र सोमदत्तपुत्र भूरिश्रवा छन्। यीबाहेक अरु पनि धेरै शूरवीरहरू छन्, जसले मेरालागि आफू बाच्ने इच्छा पनि त्यागिदिएका छन्, जो अनेक प्रकारका अस्त्रशस्त्र चलाउनका लागि पनि निपुण तथा युद्धकलामा अत्यन्त चलाख छन्॥ ७—९ ॥

**दुवै सेनाका मुख्यमुख्य योद्धाहरूलाई देखाएपछि दुर्योधनले के गर्‍यो, सञ्जय?**

दुर्योधनले मनमनै विचार गर्‍यो, दुवैको पक्ष लिने भीष्मद्वारा रक्षित हाम्रो सेना पाण्डवहरूमाथि विजय प्राप्त गर्नका लागि असमर्थ छ भने आफ्नो मात्रै पक्ष लिने भीमद्वारा रक्षित पाण्डवहरूको सेना हाम्रा सेनामाथि विजयी हुन समर्थ छ॥ १० ॥

**मनमनै यस्तो विचार गरेपछि दुर्योधनले के गऱ्यो ?**

उसले सबै शूरवीरसित 'तपाईंहरू सबै जना आआफ्नो ठाउँमा दृढतापूर्वक रहँदै पितामह भीष्मलाई चारैतिरबाट रक्षा गर्नुहोला।'* ॥ ११ ॥

**आफ्नो रक्षाको कुरा सुनेर भीष्मले के भन्नुभयो ?**

पितामह भीष्मले दुर्योधनलाई प्रसन्न तुल्याउँदै सिंहले जस्तै गरी निकै जोडले शङ्ख बजाउनुभयो ॥ १२ ॥

**भीष्मले शङ्ख बजाएपछि के भयो, सञ्जय ?**

भीष्मजीले त दुर्योधनलाई प्रसन्न तुल्याउनका लागि शङ्ख बजाउनुभएको थियो, तर कौरवसेनाले यसलाई युद्धको सुरूआतका रूपमा बुझ्यो। अतः भीष्मजीले शङ्ख बजाउना साथ कौरवसेनाका शङ्ख, भेरी, ढोल, मृदङ्ग आदि बाजा एकैसाथ बजे। तिनको आवाज निकै भयङ्कर भयो ॥ १३ ॥

**सञ्जय ! कौरवसेनाका बाजा बजिसकेपछि के भयो त ?**

कौरवसेनाको बाजा बजिसकेपछि पाण्डवहरूको बाजा बज्नुपर्ने थियो, तर ती सेनालाई कुनै आदेश प्राप्त थिएन। त्यतिबेला, सेतो घोडाले हाँकिएको महान् रथमा बसेर भगवान् श्रीकृष्णले 'पाञ्चजन्य' नामक र अर्जुनले 'देवदत्त' नामक दिव्य शङ्ख बेजोडका साथ बजाउनुभयो। त्यसपछि भीमले 'पौण्ड्र' नामक, युधिष्ठिरले 'अनन्तविजय' नामक, नकुलले 'सुघोष' नामक र सहदेवले 'मणिपुष्पक' नामक फरक फरक शङ्ख बजाए॥ १४—१६ ॥

* दुर्योधनले द्रोण, भीष्म दुवैपक्षीय हुन् भन्ने कुरा जान्दथ्यो। अतः उनीहरूलाई सहमत तुल्याएर आफ्नो पक्षमा ल्याउनका लागि दुर्योधन सुरुमा जसरी द्रोणाचार्यका नजिक गयो, त्यसैगरी भीष्मलाई सहमत तुल्याउनका लागि सबै शत्रुहरूबाट भीष्मको रक्षा गर्न भनेर भन्दै छ।

**त्यसपछि अरु कसले शङ्ख बजाए?**

हे राजन् ! त्यसपछि पाण्डवसेना श्रेष्ठ धनुर्धारी काशिराज, महारथी शिखण्डी तथा धृष्टद्युम्न, राजा विराट, अजेय सात्यकि, राजा द्रुपद, द्रौपदीका पाँचै पुत्र र महाबाहु सुभद्रापुत्र अभिमन्यु, यी सबै महारथीहरूले आआफ्ना शङ्ख बजाए॥ १७—१८॥

**पाण्डवसेनाको त्यो शङ्खध्वनिको परिणाम कस्तो रह्यो?**

पाण्डवसेनाका शङ्खको त्यो भयङ्कर ध्वनिले आकाश र पृथ्वीलाई गुन्जाउँदै अन्यायपूर्वक राज्य हडप्ने कौरवहरूको हृदयलाई विदीर्ण गरिदियो॥ १९॥

**सञ्जय, शङ्ख बजाएपछि पाण्डवहरूले के गरे?**

हे महीपते ! शङ्ख बजेपछि युद्ध आरम्भ हुने बेलामा तपाईंका सम्बन्धीहरूलाई देखेर कपिध्वज अर्जुनले आफ्नो गाण्डीव धनुष उठाए र अन्तर्यामी भगवान् श्रीकृष्णसित भने,'हे अच्युत ! हजुरले मेरो रथलाई दुवै सेनाहरूका बीचमा उभ्याइदिनुस्।'॥ २०—२१॥

**अर्जुन, रथलाई बीचमा किन उभ्याऊँ?**

मैले यो रणभूमिमा उभिएका युद्ध गर्न चाहने शूरवीरहरूलाई देख्न चाहन्छु कि मैले कुनकुनसित युद्ध लड्नु छ। यहाँ युद्धमा दुर्योधनका लागि मन पर्ने किसिमले युद्ध गर्न जुन राजाहरू उपस्थित भएका छन्, तिनलाई पनि मैले हेर्नु छ॥ २२—२३॥

**अर्जुनले यति भनेपछि भगवान्ले के गर्नुभयो त सञ्जय?**

सञ्जयले भने—हे राजन् ! निद्राविजयी अर्जुनले यति भनेपछि अन्तर्यामी भगवान् श्रीकृष्णले दुवै सेनाहरूको बिचमा पितामह भीष्म र आचार्य द्रोणका एवम् सम्पूर्ण राजाहरूका अगाडि रथलाई उभ्याएर भन्नुभयो,'हे पार्थ! यहाँ जम्मा भएका कुरुवंशीहरूलाई हेर।'॥ २४—२५॥

**भगवान्‌ले यति भनेपछि के भयो?**

त्यसपछि दुवै सेनाहरूमा रहेका पिता, पितामह, आचार्य, मामा, भाइ, पुत्र, नाति, मित्र, ससुरा र हितैषी तथा उनीहरूबाहेक अन्य कयौँ इष्टमित्रलाई देखेपछि अर्जुनले अत्यन्त कायर हुँदै विषाद गर्दै भन्न थाले।

**अर्जुनले के भने, सञ्जय?**

अर्जुनले भने,'हे कृष्ण! आफ्ना अति नजिकका इष्टमित्रलाई युद्धका लागि अगाडि उभिएको देखेपछि मेरा सबै अङ्ग शिथिल भइरहेका छन्, मुख सुकिरहेको छ, शरीर काँपिरहेको छ, रौँ ठडिएका छन्, हातबाट गाण्डीव धनुष झरिरहेको छ भने छाला पनि तातिरहेको छ। मेरो मन भ्रमित भइरहेको छ भने म उभिन पनि सकेको छैन।'॥ २६—३०॥

**यीबाहेक अरु के देखिरहेका छौ, अर्जुन?**

हे केशव! मैले शकुनहरूपनि प्रतिकूल देखिरहेको छु भने युद्धमा यी आफन्तहरूलाई मारेर केही लाभ पनि देख्दिनँ॥ ३१॥

**यिनलाई नमारी त राज्य कसरी पाइन्छ र?**

हे कृष्ण! मैले न त विजय चाहन्छु, न राज्य चाहन्छु र न सुख नै चाहन्छु। हे गोविन्द ! हामीहरूलाई राज्यबाट, भोगबाट अथवा बाँच्नुबाट पनि के नै फाइदा छ र?॥ ३२॥

**तिमीले विजय आदि किन चाहन्नौ?**

हामी जसका लागि राज्य, भोग र सुख चाहन्छौँ, तिनै सम्पूर्ण मानिस धनको आशालाई छोडेर युद्धका लागि तयार देखिन्छन्॥ ३३॥

**ती को हुन्, अर्जुन?**

आचार्य, पिता, पुत्र, हजुरबुबा, मामा, ससुरा, नाति, साला र अरु पनि धेरै आफन्तहरू छन्॥ ३४॥

**यिनै मानिस यदि तिमीलाई मार्नका लागि तयार भए भने?**

चाहे यिनले मलाई नै मारून्, तर हे मधुसुदन! मलाई त्रिलोकीको राज्य प्राप्त भए पनि मैले यिनलाई मार्न चाहन्नँ भने पृथ्वीको राज्यको कुरा त के नै हो र?॥ ३५॥

**मेरो मित्र ! राज्य प्राप्त हुँदा त निकै प्रसन्नता हुन्छ, के तिमीले त्यो पनि चाहन्नौ?**

हे जनार्दन ! धृतराष्ट्रका यी नातेदार (जो हाम्रा पनि नातेदार हुन्) लाई मारेर हामीलाई कस्तो प्रसन्नता होला र? यी आततायीहरूलाई मारेर त हामीलाई पाप मात्रै लाग्छ। यसैले, हे माधव! यी धृतराष्टका आफन्तहरूलाई हामी मार्न चाहन्नौँ, किनकि हे माधव ! आफ्ना इष्टमित्रहरूलाई मारेर हामी कसरी खुसी हुन सक्छौँ र?॥ ३६—३७॥

**यी त तिमीलाई मार्न भनी तम्तयार छन्, तिमी पछि किन हट्दै छौ?**

महाराज ! यिनीहरूको त लोभका कारण विवेक, विचार लोप भएको छ, यसैले दुर्योधन आदिले कुलको नाशले हुने दोषलाई र मित्रद्रोहबाट हुने पापलाई देख्न सकिरहेको छैनन्, तापनि हे जनार्दन ! कुलको नाशबाट हुने दोषलाई देखेका हामीहरू त यो पापबाट बच्नुपर्‍यो नि!॥ ३८—३९॥

**यदि कुलको नाश भयो नै भने के हुन्छ र?**

कुलको नाश भयो भने पहिलेदेखि चल्दै आएका कुलधर्म (कुलपरम्परा) नष्ट हुन्छन्।

**कुलधर्म नष्ट भएर के हुन्छ र?**

कुलधर्म नष्ट भएपछि सम्पूर्ण कुलमा अधर्म फैलन पुग्छ॥ ४०॥

**अधर्म फैलिएपछि हुन्छ के?**

अधर्म फैलिएपछि कुलका स्त्रीहरू दूषित हुन्छन्।

**स्त्रीहरू दूषित हुँदा के हुन्छ र?**

स्त्रीहरू दूषित भएपछि वर्णसङ्कर (ठिमाहा) जन्मन्छ॥ ४१॥

**वर्णसङ्कर जन्मिए भने के हुन्छ?**

यस्ता वर्णसङ्करहरूले कुलका घातक (कुलनाशक) लाई र सम्पूर्ण कुललाई पनि नर्कमा लिएर जान्छन् भने पिण्ड र पानी (श्राद्ध—तर्पण) नपाएपछि तिनका पितृ पनि आफ्ना स्थानबाट तल झर्दछन्। यस्ता वर्णसङ्कर जन्माउने दोषहरूद्वारा कुलघातिहरूबाट सधैँ चल्दै आएको कुलधर्म र जातिधर्म दुवै नष्ट हुन्छन्॥ ४२—४३॥

**जसको कुलधर्म नष्ट हुन्छ, ती मानिसहरूको के हुन्छ?**

हे जनार्दन! ती मानिसहरूलाई लामो समयसम्म नर्कमै बसोबास गर्नुपर्ने हुन्छ, हामीले यही सुनेका छौँ॥ ४४॥

**युद्धका यी परिणामलाई यदि सुरूमै जान्दछौ भने तिमी युद्धका लागि किन तयार भयौ त?**

यही त निकै आश्चर्य र खेदको विषय छ कि हामीले ठूलो पाप गर्ने निश्चय गरेर बसेका छौँ, अर्थात, राज्य र सुखको लोभका लागि आफ्ना कुटुम्बीहरूलाई मार्नका लागि तयार भएका छौँ॥ ४५॥

**अब तिमी के गर्न चाहन्छौ त?**

म अस्त्रशस्त्र छोडेर युद्धबाट पछाडि फर्कन्छु। यदि मैले यसो गरेँ भने पनि हातमा अस्त्रशस्त्र लिएका दुर्योधन आदिले मलाई मारिदिए भने पनि मेरा लागि त्यो पनि अत्यन्त हितकारी हुन्छ॥ ४६॥

**यति भनिसकेपछि अर्जुनले के भने त सञ्जय?**

सञ्जयले भने—यति भनेर शोकले व्याकुल मन भएका अर्जुनले बाणसहित धनुषलाई त्यागिदिएर रथको बीच भागमा गएर बसे॥ ४७॥

॥ श्रीपरमात्मने नमः ॥

# दोस्त्रो अध्याय

**रथको बीचमा बसेपछि अर्जुनको अवस्था कस्तो रह्यो ?**

सञ्जयले भने—हे राजन् ! जो निकै उत्साहपूर्वक युद्ध गर्नका लागि आएका थिए, तर कायरतावश जसले विशाद गरिरहेका छन् र जसको आँखामा यति आँसु भरिएको छ कि हेर्न पनि मुस्किल भइरहेको छ, त्यस्ता अर्जुनसित भगवान् मधुसुदन भन्नुहुन्छ, हे अर्जुन! यो बेला न कुबेला तिमीमा यो कमजोरी कहाँबाट आयो ? यस्तो कायरता न त श्रेष्ठ पुरुषमा हुन सुहाउँछ, न त यसले स्वर्ग नै दिन्छ, न त कीर्ति प्रदान गर्ने खालको नै छ। यसर्थ, हे पार्थ! तिमीले यो नपुंसकता आफूमा आउन नदेऊ, किनकि तिमीजस्तो पुरूषमा यस्तो कुरा आउनु उचित होइन। अतः हे परंतप! हृदयको यो तुच्छ दुर्बलतालाई छोडेर तिमी युद्धका लागि तयार होऊ॥ १—३ ॥

**यो कुरा सुनेपछि अर्जुनले के भने त सञ्जय ?**

अर्जुनले भने—महाराज! म मर्नका लागि डराएको होइन, मार्नका लागि डराएको हुँ। हे अरिसूदन! यी भीष्म र द्रोण त पूजनीय छन्। यसैले, हे मधुसूदन! यस्ता पूज्यजनलाई कठोर शब्द पनि भन्नुहुँदैन भने उनीहरूसित म बाणले कसरी युद्ध गर्न सक्छु ?॥ ४॥

**मित्र, केवल कर्तव्यको पालन गर्ने समयमा पनि अरु केही देखिन्छ र ?**

महाराज! गुरूजन महानुभावहरूलाई नमारीकन मैले यो

मनुष्यलोकमा भिक्षाको अन्नले जीवननिर्वाह गर्नु पनि श्रेष्ठ ठान्दछु। यदि हजुरले भनेअनुसार मैले युद्ध गरेँ भने पनि गुरूजनहरूलाई मारेर उनीहरूको रगतले लतपतिँदै धनको कामना प्रधान भएको भोगलाई नै त भोग्ने हो। यसबाट मलाई शान्ति कहाँ प्राप्त हुन्छ र?॥ ५ ॥

**त्यसोभए तिमीले के गर्न ठीक ठान्छौ त?**

हे भगवन्! हामीले युद्ध गर्नु ठीक हो कि बेठीक, अथवा युद्धमा उनीहरूले जित्छन् या हामीले, यही बुझ्न सकेका छैनौँ। सबैभन्दा ठूलो कुरा के हो भने भगवन्, हामीले जसलाई मारेर बाँच्न पनि चाहँदैनौँ, तिनै धृतराष्ट्रका आफन्त हाम्राअगाडि उभिएका छन्। यिनलाई हामी कसरी मार्न सक्छौँ?॥ ६ ॥

**यदि तिमीले निर्णय गर्न सक्दैनौ भने कस्तो उपाय सोच्दै छौ त?**

हे महाराज ! कायरतापूर्ण दोषका कारण मेरो क्षत्रीय स्वभाव दबेको छ र धर्मको निर्णयका लागि मेरो बुद्धिले काम गरिरहेको छैन, यसर्थ जुन कुराले मेरो निश्चितरूपमा कल्याण हुन्छ, त्यो कुरा बताउनुस्। म हजुरको शिष्य हुँ र हजुरकै शरणमा छु। हजुरले मलाई शिक्षा दिनुस्। तर प्रभो ! हजुरले सुरूमा जसरी युद्ध गर्न भनेर भन्नुभएको थियो, फेरि त्यसो नभन्नुहोला, किनकि युद्धको परिणामस्वरूप मलाई यहाँको धनधान्यले सम्पन्न निष्कण्टक राज्य प्राप्त होला, देवताको आधिपत्य प्राप्त होला, तापनि इन्द्रियलाई सुकाउने यो शोक हराउला भन्ने मलाई लाग्दैन॥ ७—८ ॥

**त्यसपछि के भयो त सञ्जय?**

सञ्जयले भने—हे राजन्! निद्राविजयी अर्जुन अन्तर्यामी

भगवान् श्रीकुष्णसित 'मैले युद्ध गर्दिनँ' भने स्पष्टसित भनेर चुप लागे॥ ९॥

**अर्जुन चुप लागेपछि भगवान्ले के भन्नुभयो?**

अन्तर्यामी भगवान् श्रीकृष्णले दुवै सेनाका बीचमा विषाद गर्दै गरेका अर्जुसित मुस्कुराउँदै भन्न थाल्नुभयो, तिमीले शोक गर्न नपर्ने विषयमा शोक गर्दछौ र पण्डितले जस्ता ठूलाठूला कुरा पनि गर्दछौ, तर जो मरिसकेका छन्, तिनका लागि र जसले जितेका छन्, तिनका लागि पनि पण्डिहरूले शोक गर्दैनन्॥ १०—११॥

**शोक किन गर्दैनन् भगवान्?**

म, तिमी र यी राजाहरू, सबै पहिला थिएनन् भन्ने कुरा पनि होइन, हामी सबै पछि रहँदैनौँ भन्ने पनि होइन, अर्थात्, हामी सबै पहिला पनि थियौँ र पछि पनि रहने छौँ भन्ने बुझेर पण्डितहरू शोक गर्दैनन्॥ १२॥

**यो कुरालाई कसरी बुझ्ने त?**

बन्धु, देहधारीको यो शरीरमा जसरी कुमार, युवा र वृद्धावस्था हुन्छ, त्यसैगरी देहधारीलाई पनि दोस्रो शरीर प्राप्त हुन्छ। यस विषयमा पण्डितहरू मोहित हुँदैनन्॥ १३॥

**कुमार आदि अवस्था शरीरको हुन्छ भन्ने कुरा त ठीक छ, तर अनुकूल, प्रतिकूल, सुखदायी—दुःखदायी पदार्थ अगाडि आए भने के गर्ने, भगवन्?**

हे कुन्तिनन्दन! इन्द्रियका जेजति विषय (जड पदार्थ) छन्, ती सबै अनुकूलता र प्रतिकूलतामार्फत सुख र दुःख दिने किसिमका छन्, तर ती आउनेजाने र अनित्य छन्। यसर्थ, हे अर्जुन! तिनलाई तिमीले सहन गर र उनीहरूमा तिमी निर्विकार बस॥ १४॥

**तिनलाई सहनाले र निर्विकार रहनाले के लाभ हुन्छ र?**

हे पुरुष श्रेष्ठ अर्जुन! सुख—दुःखमा समान (विर्विकार) रहने जुन धीर पुरुषलाई यी इन्द्रियका विषय (जडपदार्थ) ले सुखी अथवा दुःखी बनाउँदैनन्, उसले स्वतःसिद्ध अमरता (परमात्मा) को अनुभव गर्दछ॥ १५ ॥

**उसले अमरताको अनुभव कसरी गर्दछ?**

सत्(चेतन तत्त्व) को सत्ताको कहिल्यै अभाव हुँदैन भने असत् (जड पदार्थ)को सत्ता हुँदैन। यी दुवैका रहस्यलाई तत्त्वदर्शी (ज्ञानी) महापुरूषहरूले जान्दछन्, यसैले उनीहरू अमर हुन्छन्॥ १६ ॥

**त्यो सत् ( अविनाशी ) के हो त भगवन्?**

जसद्वारा यो चराचर जगत् व्याप्त छ, त्यसैलाई तिमीले सत् अविनाशी ठान। यस अविनाशीको विनाश कसैले पनि गर्न सक्दैन॥ १७॥

**असत् ( विनाशी ) के हो भगवन्?**

यस अविनाशी, अप्रमेय र नित्य रहने शरीरीका यी सबै शरीर अन्तवाला छन्, विनाशी छन्। यसैले, हे अर्जुन! तिमीले आफ्नो युद्धरूपी कर्तव्यकर्मको पालन गर॥ १८॥

**युद्धमा त मर्ने र मार्ने मात्रै हुन्छ, यसर्थ यदि शरीरीलाई मर्ने र मार्नेवाला मान्ने हो भने नि?**

जसले यस अविनाशी शरीरीलाई शरीरलाई जस्तै मर्ने ठान्दछ र जसले मार्नेवाला ठान्दछ, ती दुवैले राम्ररी जान्दैनन्, किनकि यसले न कसैलाई मार्दछ, न स्वयम् नै मर्दछ॥ १९॥

**यो शरीरी मर्नेवाला किन होइन, भगवान्?**

यो शरीरी न त कहिल्यै पैदा हुन्छ, न त कहिल्यै मर्दछ नै। यो पैदा भएर फेरि हुनेवाला होइन। यो जन्मरहित, नित्य—निरन्तर रहनेवाला, शाश्वत र अनादि छ। शरीर मारिए पनि यो मारिँदैन॥ २०॥

**यो जान्नाले के हुन्छ?**

हे पार्थ! जुन मनुष्यले यो शरीरलाई नित्य, जन्मरहित र अव्यय ठान्दछ, उसले कसरी कसलाई मार्दछ र कसरी कसैलाई मार्न लगाउँछ?॥ २१॥

**त्यसोभए, को मर्छ त भगवान्?**

बन्धु, शरीर मर्दछ। मानिसले जसरी पुरानो कपडा छोडेर नयाँ कपडा लगाउँछ, त्यसैगरी यो शरीरी पनि पुरानो शरीरलाई छोडेर नयाँ शरीरमा जान्छ॥ २२॥

**नयाँनयाँ शरीर धारण गर्दा यसमा कुनै न कुनै विकार त अवश्य आउँछ होला, है?**

अहँ, यसमा कहिल्यै कुनै विकार आउँदैन, किनकि यस शरीरीलाई हतियारले काट्न सक्दैन, आगोले जलाउन सक्दैन, पानीले गलाउन सक्दैन र वायुले पनि सुकाउन सक्दैन॥ २३॥

**यो शस्त्र आदिले काटिने, जल्ने, गल्ने र सुक्ने किन हुँदैन?**

यो शरीरी काटिन पनि सक्दैन, जलाउन पनि सकिँदैन, चिसो बनाउन पनि सकिँदैन भने सुकाउन पनि सकिँदैन, किनकि यो सधैँ रहने, सबैमा परिपूर्ण, स्थिर स्वभाववाला, अचल र सनातन छ। यो देही इन्द्रिय आदिको विषय होइन, अर्थात् यो प्रत्यक्ष देखिँदैन। यो अन्तःकरणको पनि विषय होइन र यसमा कुनै विकार पनि हुँदैन। यसैले, यो देहीलाई यस्तो बुझेपछि तिमीले शोक गर्नुहुँदैन॥ २४—२५॥

**यो शरीरीलाई निर्विकार मान्दा शोक हुँदैन, तर यसलाई विकारी मान्दा त शोक हुन्छ नि त?**

हे महामाहो! यदि तिमीले यो शरीरीलाई सधैँ जन्मिने र सधैँ मर्ने नै मान्यौ भने पनि तिमीले यसको बारेमा शोक गर्न हुँदैन, किनकि जो जन्मिएको छ, त्यो अवश्य मर्दछ र जो मरेको छ, ऊ अवश्य जन्मन्छ। यो नियमलाई कसैले पनि टार्न सक्दैन। त्यसैले, शरीरीलाई लिएर तिमीले शोक गर्न हुँदैन॥ २६—२७॥

**शरीरीलाई लिएर शोक गर्नुहुँदैन, यो त ठीक छ, तर शरीरलाई लिएर शोक त हुन्छ नि भगवान्?**

शरीरलाई लिएर पनि शोक गर्नुहुँदैन, किनकि हे भारत! सबै प्राणी जन्मपूर्व अप्रकट थिए र मरेपछि फेरि अप्रकट हुन्छन्, केवल बीचमा प्रकट भएका देखिन्छन्। अतः यसमा शोक गर्नुपर्ने कुरै के छ र?॥ २८॥

**त्यसोभए शोक किन हुन्छ त?**

नबुझ्नाले।

**बुझ्नेचाहिँ कसरी हो त?**

त्यसलाई बुझ्ने अर्थात् अनुभव गर्ने कुरा इन्द्रिय, मन र बुद्धिहरूबाट हुँदैन। यसर्थ, यस शरीरीलाई देख्नु, भन्नु, सुन्नु सबै आश्चर्यजस्तै हुन्छ। अतः यसलाई सुनेर कसैले पनि जान्दैन, अर्थात् यसको अनुभव त आफैँले गर्ने हो॥ २९॥

**त्यो कसरी हुन्छ त?**

हे भरतवंशी अर्जुन! सबैका देहमा रहने यो देही अवश्य नित्य अवध्य छ भन्ने जानेर तिमीले कुनै प्राणीका लागि पनि शोक गर्नुहुँदैन॥ ३०॥

**शोक हटाउनका लागि त हजुरले धेरै कुरा भन्नुभयो, तर मलाई जुन पापको डर लागिरहेको छ, त्यो कसरी हट्‌ला त?**

आफ्नो धर्म (क्षात्रधर्म) लाई हेरेर पनि तिमी भयभीत हुन हुँदैन, किनकि क्षत्रियका लागि धर्ममय युद्धभन्दा ठूलो कुनै कल्याणकारक कर्म छैन॥ ३१ ॥

**त्यसोभए क्षत्रियले युद्ध गरेरै बाँच्नुपर्ने हो?**

त्यस्तो होइन, जुन युद्ध आफैँ हुन जान्छ, अगाडि आउँछ, त्यो युद्ध त क्षत्रियका लागि खुला ढोकाजस्तै हो। यसर्थ, हे पार्थ! यस्तो युद्ध जसलाई प्राप्त हुन्छ, तिनै वास्तवमा सुखी छन्[१] ॥ ३२ ॥

**यदि यसरी आफैँ अगाडि आएको युद्ध मैले गरिनँ भने?**

यदि यस्तो धर्मयुद्ध गरेनौ भने तिम्रो क्षात्रधर्मको र तिम्रो कीर्तिको नाश हुन्छ भने तिमीलाई कर्तव्यपालन नगर्नुको पाप पनि लाग्ने छ॥ ३३ ॥

**अपकीर्ति भएर के हुन्छ र?**

हे अर्जुन! तिमीले युद्ध गरेनौ भने त देवता, मनुष्य आदि सबैले धेरै दिनसम्म तिम्रो अपकीर्तिको चर्चा गर्ने छन्। त्यो अपकीर्ति आदरणीय, सम्माननीय मनुष्यका लागि मृत्युभन्दा पनि दुःखदायी हुन्छ[२] ॥ ३४ ॥

**अरु के हुन्छ, भगवान्?**

---

१. भोगहरू प्राप्त हुनु कुनै सुख होइन, बरू त्यो ठूलो दुःखको कारण हो। (५।२२) वास्तविक सुख त त्यो हो, जुन दुःखदेखि मुक्त हुन्छ। दुःखले रहित सुख भनेको नै स्वधर्मरूपी कर्तव्यकर्म निर्वाह गर्ने अवसर मिल्नु हो। अतः जसलाई कर्तव्य पालनको अवसर प्राप्त भएको छ, उनीहरू नै वास्तवमा सुखी र भाग्यशाली हुन्।

२. मर्दा मात्रै अपकीर्ति हुँदैन, किनकि मर्नु त हरेकले छँदै छ। अपकीर्ति त आफ्नो कर्तव्यबाट पछि हट्नाले हुन्छ।

जुन भीष्म, द्रोणाचार्य आदि महारथीहरूको दृष्टिमा तिमी श्रेष्ठ मानिएका छौ, तिनको दृष्टिमा तिमी तुच्छ हुने छौ भने ती महारथीहरूले तिमीलाई मृत्युदेखि डराएर भागेको ठान्ने छन्॥ ३५॥

**के मैले यो सहन सक्दिनँ र भगवान्?**

अहँ, तिमीले सहन सक्दैनौ, किनकि तिम्रा शत्रुहरूलाई वैरभाव प्रकट गर्ने मौका मिल्ने छ। उनीहरूले तिम्रो सामर्थ्यको निन्दा गर्दै तिमीलाई भन्न नहुने कुरा भन्ने छन्। त्योभन्दा ठूलो दुःख के हुन्छ?॥ ३६॥

**यदि मैले युद्ध गरेँ भने नि?**

युद्ध गर्दा गर्दै यदि तिमी मारियौ भने तिमीलाई स्वर्ग प्राप्त हुने छ भने यदि विजयी भयौ भने तिमीलाई पृथ्वीको राज्य प्राप्त हुने छ। अतः हे कुन्तिनन्दन! तिमीले युद्धको निश्चय गरी तयार होऊ॥ ३७॥

**के युद्धबाट मलाई पाप लाग्दैन र भगवान्?**

अहँ, पाप त स्वार्थ बुद्धिका कारण हुन्छ। तसर्थ, तिमी जय—पराजय, लाभहानि र सुखदुःखमा समान धारणा बनाएर युद्ध गर। यसरी युद्ध गर्दा तिमीलाई पाप लाग्दैन॥ ३८॥

**जुन समबुद्धिले कर्म गर्दा अलिकति पनि पाप लाग्दैन, त्यसका अरु केकस्ता विशेषता छन्, भगवान्?**

यो समबुद्धिको कुरा मैले सुरुमै साङ्ख्ययोगमा भनिदिएको छु। अब तिमीले यसको कर्मयोगका बारेमा सुन—

१. यस समबुद्धिले युक्त भएका तिमी सम्पूर्ण कर्मका बन्धनबाट छुट्नेछौ।

२. यस समबुद्धिको सुरुआत मात्रैको पनि नाश हुँदैन।

३. यसको अनुष्ठानको कहिल्यै पनि उल्टो फल हुँदैन।

४. यसको अलिकति मात्रै पनि अनुष्ठानले जन्ममरणरूपी महान् भयबाट रक्षा गर्दछ॥ ३९—४०॥

**जुन समबुद्धिको हजुरले यति धेरै महिमागान गर्नुभयो, त्यसलाई प्राप्त गर्ने उपाय के हो?**

यस समबुद्धिलाई प्राप्त गर्ने सन्दर्भमा व्यवसायात्मिका(एक परमात्माप्राप्तिको निश्चय गर्ने) बुद्धि एउटा हुन्छ, तर जसको परमात्माप्राप्तिको एक निश्चय छैन, त्यस्तो मनुष्यका बुद्धिहरू(निश्चय) अनन्त र बहुशाखायुक्त हुन्छन्॥ ४१॥

**उनीहरूको परमात्माप्राप्तिका लागि एउटा निश्चय किन हुँदैन?**

१. जो कामनाकै लागि तन्मय भएको छ, २. स्वर्गलाई नै श्रेष्ठ मान्नेवाला छन्, ३. वेदमा भनिएका सकाम कर्ममै प्रीति राख्नेहरू छन्, र ४.भोगभन्दा अरु केही पनि छैन भनेर मान्नेहरू छन्, ती अबुझहरूले यो पुष्पित(देखावटी शोभायुक्त) कुरा भन्ने गर्दछन्, जुन जन्मरूप कर्मफल प्रदान गर्नेवाला छ तथा भोग र ऐश्वर्यको प्राप्तिका लागि धेरै क्रियाकलापको वर्णन गर्ने खालको छ। भोगहरूको वर्णन गर्ने पुष्पित वाणीले जसको चित्त हरण भएको छ अर्थात् भोगतिर खिचिएको छ, जो भोग र ऐश्वर्यमा अत्यन्त आसक्त छन्, ती मानिसको परमात्मामा निश्चयपूर्ण बुद्धि हुन सक्दैन॥ ४२—४४॥

**भोग र ऐश्वर्यको आसक्तिबाट बच्नका लागि मैले के गर्नुपर्दछ, भगवान्?**

वेदले तीनै गुणहरूका कार्य(संसार)को वर्णन गर्दछन्। तसर्थ हे अर्जुन' तिमीले वेदमा बताइएका सकाम कर्महरूबाट मुक्त बन, रागद्वेष आदि द्वन्द्वहरूबाट रहित बन र नित्यनिरन्तर रहने परमात्मातत्त्वमा स्थित होऊ। तिमी अप्राप्त वस्तुको प्राप्ति र प्राप्त वस्तुको रक्षाको चिन्ता पनि नगर। केवल परमात्मा—परायण

बन, अर्थात् परमात्माप्राप्तिको लक्ष्य राख॥ ४५॥

**यस्तो एउटा निश्चय कसैले गर्‍यो भने त्यसको परिणाम के हुन्छ?**

जसरी ठूलो पोखरी प्राप्त भएपछि सानो पोखरीको कुनै महत्त्व हुँदैन, कुनै आवश्यकता हुँदैन, त्यसरी नै वेद र शास्त्रका अर्थलाई बुझ्ने तत्त्वज्ञ एवम् जीवन्मुक्त महापुरूषको दृष्टिमा सम्पूर्ण वेदहरूको त्यति नै महत्त्व छ, अर्थात् उनीहरूको मनमा संसार र भोगहरूको कुनै महत्त्व रहँदैन॥ ४६॥

**मेरालागि यो अवस्था प्राप्त गर्ने कुनै उपाय छ त?**

छ, कर्मयोग हो। तिम्रो कर्तव्यकर्म गर्नुमा नै अधिकार छ, फलमा होइन, अर्थात् तिमीले फलको आशा नराखी आफ्नो कर्तव्य पालन गर। तिमी कर्मफलका हेतु पनि नबन, अर्थात् जसबाट कर्म गरिन्छ, ती शरीर—इन्द्रिय—मन—बुद्धि आदिमा पनि ममता नराख।

**त्यसोभए मैले किन कर्म गर्नुपर्‍यो त?**

कर्म नगर्नुमा पनि तिम्रो आसक्ति हुनुभएन॥ ४७॥

**त्यसोभए कर्म कसरी गरूँ त?**

सिद्धि—असिद्धिमा समान हुनु 'योग' हो, यसर्थ हे धनञ्जय! तिमीले आसक्तिलाई परित्याग गरी योग (समता) मा स्थित भएर कर्म गर॥ ४८॥

**यदि योग (समता) मा स्थित भएर कर्म गरिनँ भने नि?**

यस समताविना सकाम कर्महरू अत्यन्तै निकृष्ट हुन्छन्। अतः हे धनञ्जय! तिमीले समबुद्धिकै आश्रय ग्रहण गर, किनकि कर्मफलको इच्छा राख्नेहरू कृपण हुन्, अर्थात् कर्मफलका गुलाम हुन्॥ ४९॥

**कर्मफलको इच्छा हुनेहरू कृपण हुन् भने श्रेष्ठ को हुन् त?**

समबुद्धिले युक्त मनुष्य श्रेष्ठ हो। समबुद्धिले युक्त मानिस

यही जीवित अवस्थामै पापपुण्यले रहित हुन्छ। यसर्थ, तिमी समतामा स्थित होऊ, किनकि कर्ममा समता नै कुशलता हो॥ ५०॥

**समबुद्धिको परिणाम कस्तो हुन्छ, भगवान्?**

समतायुक्त मनीषीहरूले कर्मजन्य फललाई त्यागेर र जन्मरूप बन्धनबाट मुक्त भएर निर्विकार पदलाई प्राप्त गर्दछन्॥ ५१॥

**मैले कर्मजन्य फलको त्याग गरेको छु भन्ने कुरा कहिले थाहा पाउँछु?**

जब तिम्रो बुद्धिले मोहरूपी दलदललाई पार गर्दछ, तब तिमीलाई सुनेका र सुन्नमा आउने (भुक्त र अभुक्त) भोगहरूदेखि वैराग्य हुन्छ॥ ५२॥

**वैराग्य भएपछि समताको प्राप्ति कहिले हुन्छ?**

शास्त्रका अनेक सिद्धान्त एवम् मतभेदहरूले विचलित भएको तिम्रो बुद्धि जब संसारदेखि सर्वथा विमुख भएर परमात्मामा अचल हुन पुग्छ, तब तिमीलाई योग (साध्यरूप समता) को प्राप्ति हुन्छ॥ ५३॥

**अर्जुनले भने—समताप्राप्त स्थिरबुद्धि भएका मनुष्यका लक्षण कस्ता हुन्छन्?**

भगवान्‌ले भन्नुभयो—हे पार्थ! जब साधकले मनमा भएका सम्पूर्ण कामनाको त्याग गरिदिन्छ र आफूदेखि आफूभित्रै सन्तुष्ट रहन्छ, अनि ऊ स्थितप्रज्ञ (स्थिर बुद्धिवाला) हुन पुग्छ॥ ५४—५५॥

**त्यो स्थितप्रज्ञ कसरी बोल्छ?**

अर्जुन! उसको बोल्ने तरिका सामान्य हुँदैन, भावरूपले हुन्छ। वर्तमानमा व्यवहार गर्दै जाँदा दुःखको प्राप्ति हुँदा जसको मनमा उद्वेग हुँदैन र सुखको प्राप्ति हुँदा जसको मनमा स्पृहा हुँदैन, जो राग, भय र क्रोधले रहित भएको छ, त्यो मननशील मनुष्य

स्थितप्रज्ञ हुन पुग्छ। सबैतिर आसक्तिरहित हुँदै जसले प्रारब्धअनुसार अनुकूल परिस्थिति आउँदा हर्षित हुँदैन र प्रतिकूल परिस्थिति आउँदा द्वेष गर्दैन, उसको बुद्धि स्थिर भएको छ, अर्थात् पहिले उसले 'मैले परमात्मालाई नै पाउनु छ' भनेर जुन निश्चय गरेको थियो, त्यो अब सिद्ध भएको छ॥ ५६—५७॥

**त्यो स्थितप्रज्ञ कसरी बस्छ, भगवन्?**

कसरी कछुवा आफ्ना चार खुट्टा, गर्धन र पुछार गरी छ ओटा अङ्गलाई समेटेर बस्दछ, त्यसैगरी जुन समयमा त्यो कर्मयोगीले सम्पूर्ण इन्द्रिय र मनलाई आआफ्ना विषयहरूबाट समेट्छ, हटाउँछ, त्यतिबेला उसको बुद्धि स्थिर हुन जान्छ॥ ५८॥

**इन्द्रियलाई समेटेको अवस्थाको पहिचान के हो?**

इन्द्रियलाई आफ्ना विषयबाट हटाउने देहाभिमानी मनुष्यका पनि विषयहरू त निवृत्त हुन्छन् नै, तर रसबुद्धि(सुख—भोग—बुद्धि) निवृत्त हुँदैन। तर, परमात्माको प्राप्ति हुनाले यस स्थितप्रज्ञ मनुष्यको रसबुद्धि पनि निवृत्त हुन जान्छ॥ ५९॥

**रसबुद्धि रहँदा के हानि हुन्छ?**

हे कुन्तिनन्दन! रसबुद्धि रहनाले साधनपरायण विवेकी मनुष्यका पनि प्रमथनशील इन्द्रियहरूले उसको मनलाई पनि जबर्जस्ती विषयतिर खिचेर लैजान्छन्॥ ६०॥

**यो रसबुद्धिलाई हटाउनका लागि के गर्नुपर्छ त भगवन्?**

कर्मयोगी साधक सम्पूर्ण इन्द्रियलाई वशमा गरेर ममा आश्रित हुँदै बसोस् र मेरो भरोसामा निश्चिन्त होओस्। यसरी, जसका इन्द्रिय वशमा छन्, तिनको बुद्धि पनि प्रतिष्ठित हुन्छ॥ ६१॥

**हजुरमा आश्रित नहुँदा के हुन्छ?**

ममा आश्रित नहुँदा विषय(भोगहरू)हरूको चिन्तन हुन्छ।

**विषयको चिन्तनले के हुन्छ?**

ती विषयमा मानिसको आसक्ति हुन्छ।

**आसक्ति हुँदा के हुन्छ?**

ती विषय (भोगहरू) लाई पाउने कामना पैदा हुन्छ।

**कामना पैदा हुँदा के हुन्छ र?**

कामनाको पूर्तिमा बाधा हुँदा क्रोध आउँछ॥ ६२॥

**क्रोध आएपछि के हुन्छ?**

क्रोध आएपछि सम्मोह हुन्छ, अर्थात् मूढता छाउँछ।

**मूढता छाएपछि के हुन्छ?**

'म साधक हुँ भने मैले यस्तो व्यवहार गर्नुपर्दछ, यस्तो बोल्नुपर्दछ' आदि विचार जुन पहिले गरिएका थिए, तिनको स्मृति नष्ट हुन्छ, अर्थात् सम्झना हराउँछ।

**स्मृति नष्ट भएपछि के हुन्छ?**

बुद्धि (नयाँ विचार गर्ने शक्ति) नष्ट हुन पुग्छ अर्थात् यतिबेला मैले के गर्नुपर्दछ, के गर्नुहुँदैन भन्ने विवेक शक्ति दब्न पुग्छ।

**बुद्धि नष्ट भएपछि के हुन्छ?**

त्यस मानिसको पतन हुन्छ॥ ६३॥

**स्थितप्रज्ञ बस्ने कुरा त हजुरले भन्नुभयो, अब ऊ कसरी हिंड्छ, त्यो भन्नुस्?**

प्रिय मित्र! ऊ हिँड्नु क्रियारूपले होइन, भावरूपले हो। वशीभूत अन्तःकरणवाला साधकले रागद्वेषले रहित र आफ्नो वशमा गरिएका इन्द्रियद्वारा विषयको उपभोग गर्दै अन्तःकरणको प्रसन्नता प्राप्त गर्दछन्॥ ६४॥

**अन्तःकरणको प्रसन्नतालाई प्राप्त गरेर के हुन्छ?**

त्यस प्रसन्नचित्त भएको मनुष्यका सम्पूर्ण दुःख नाश हुन्छन् र बुद्धि पनि छिटै परमात्मामा स्थिर हुन जान्छ॥ ६५ ॥

**बुद्धि स्थिर कसको हुँदैन?**

जसको मन र इन्द्रिय संयमित छैनन्, यस्तो मानिसको व्यवसायात्मिका(एक निश्चयवाला) बुद्धि हुँदैन। व्यवसायात्मिका (एक निश्चयको) बुद्धि नहुनाले उसको 'मैले केवल आफ्नो कर्तव्यपालन गर्नु छ' भन्ने भावना, विचार हुँदैन। यस्तो भावना नहुँदा अर्थात् आफ्नो कर्तव्यपालन नहुँदा उसलाई शान्ति प्राप्त हुँदैन, अनि अशान्त मनुष्यलाई सुख पनि कसरी प्राप्त हुन्छ र?॥ ६६ ॥

**जो संसारी ( भोगी ) छ, उसको बुद्धि स्थिर हुने सम्भावना नै छैन, तर जो साधक छ, उसको बुद्धि स्थिर नहुने कारण के होला?**

पानीमा हिँडिरहेको डुँगालाई जसरी हावाले हल्लाउँछ, त्यसैगरी साधकका आआफ्ना विषयमा विचरण गर्दै गरेका इन्द्रियमध्ये एउटा इन्द्रिय मात्र पनि मनसित हुन्छ भने त्यस इन्द्रियसित मिलेको त्यो एक्लो मनले नै त्यस साधकको बुद्धिलाई हरण गरिदिन्छ॥ ६७ ॥

**त्यसोभए बुद्धि स्थिर कसको हुन्छ त?**

हे महाबाहो! जसका इन्द्रियहरू सबै प्रकारले वशमा छन् अर्थात् जसको मनबाट पनि विषयको चिन्तन हुँदैन, उसको बुद्धि स्थिर हुन्छ॥ ६८ ॥

**जसका इन्द्रिय वशमा छैनन्, त्यस्ता सामान्य मानिसमा र जसका इन्द्रिय वशमा छन्, त्यस्ता संयमी मनुष्यमा के फरक छ?**

साधारण मनुष्यको जुन रात हुन्छ, अर्थात् जो परमात्माप्राप्तिका

विषयमा एकदमै सुतेका छन्, त्यस रातमा संयमी मनुष्य जाग्दछ, अर्थात् परमात्मतत्त्वको अनुभव गर्दछ भने जसमा साधारण मनुष्य जाग्दछन्, अर्थात् भोग भोग्ने र सङ्ग्रह गर्नेतिर धेरै सावधान, सजग रहन्छन्, त्यो त परमात्मतत्त्वलाई बुझ्ने मननशील मनुष्यको दृष्टिमा रात हो, अँधेरो हो॥ ६९ ॥

**त्यसोभए, त्यो संयमी मनुष्यका अगाडि भोग्यपदार्थ नै आउँदैनन् होला ?**

आउँछन्, तर जसरी आफ्नै मर्यादामा अटल रहने र चारैतिर पानीले परिपूर्ण समुद्रमा सम्पूर्ण नदीहरूको पानी आएर मिल्छ, तर त्यसले समुद्रमा कुनै पनि विकार पैदा गर्दैन, त्यसैगरी त्यस संयमी मनुष्यका अगाडि संसारका सबै भोग आउँछन्, तर तिनले उसमा कुनै पनि विकार पैदा गर्न सक्दैनन्। यस्तो मानिसले नै परमशान्ति (परमात्मातत्त्व) प्राप्त गर्दछ, भोगको कामना गर्नेले होइन॥ ७० ॥

**भोगको कामना गर्नेलाई पनि शान्ति कसरी प्राप्त होला ?**

उनीहरूलाई त त्यागबाट नै शान्ति प्राप्त हुन्छ। जो मनुष्य सम्पूर्ण कामना र स्पृहा त्यागेर अहंता र ममताले रहित भएर विचरण गर्दछ, उसलाई शान्ति प्राप्त हुन्छ॥ ७१ ॥

**अहंता—ममताले रहित हुँदा उसको स्थिति कस्तो हुन्छ ?**

उसको स्थिति ब्रह्ममा हुन्छ। हे पार्थ! यही ब्राह्मी स्थिति हो। यसलाई पाएपछि मानिस कहिल्यै मोहित हुँदैन। यदि मनुष्य यस ब्राह्मी स्थितिमा अन्तिमसमयमा पनि रह्यो अर्थात् अन्तिमसमयमा पनि अहंता—ममतारहित भयो भने उसले निर्वाण( शान्त) ब्रह्मलाई प्राप्त गर्दछ॥ ७२ ॥

॥ श्रीपरमात्मने नमः ॥

# तेस्रो अध्याय

**अर्जुनले भने— हे जनार्दन! तपाईंको विचारमा जब (ज्ञान) बुद्धि नै श्रेष्ठ हो भने फेरि हे केशव! तपाईंले मलाई घोर कर्ममा किन लगाउनुहुन्छ? कहिले तपाईंले कर्म गर भन्नुहुन्छ, कहिले ज्ञानको आश्रय लेऊ भन्नुहुन्छ। तपाईंले भनेका यी कुराले मेरो बुद्धि मोहितजस्तै भएको छ। यसर्थ, एउटा निश्चित कुरा भन्नुस्, जसले मेरो कल्याण होस्॥ १-२ ॥**

भगवान्ले भन्नुभयो—हे निष्पाप अर्जुन! यस मनुष्यलोकमा दुई तरिकाले हुने निष्ठा मैले बताएँ। तिनमा साङ्ख्ययोगीहरूको निष्ठा ज्ञानयोगबाट र योगीहरूको निष्ठा कर्मयोगबाट हुन्छ, अर्थात् ज्ञानयोग र कर्मयोगबाट एउटै समबुद्धिको प्राप्ति हुन्छ॥ ३ ॥

**के त्यो समता प्राप्तिका लागि कर्म गर्न जरूरी छ?**

हो, जरूरी छ, किनकि मनुष्यले न त कर्म आरम्भ नगरी निष्कर्मतालाई प्राप्त गर्न सक्छ, न कर्मको त्यागबाट सिद्धिलाई नै प्राप्त गर्दछ। अर्थात्, त्यस समताको प्राप्ति कर्मको आरम्भ नगरी हुँदैन र कर्मको त्यागबाट पनि हुँदैन॥ ४ ॥

**कर्मको त्यागबाट किन हुँदैन?**

कुनै पनि मानिस कुनै पनि अवस्थामा एकछिन पनि कर्म नगरी बस्न सक्दैन, किनकि प्रकृतिजन्य गुणले स्वभावैले अधीनस्थ प्राणीहरूलाई कर्म गराउँछन् भने प्राणीले कर्मत्याग

कसरी गर्न सक्छ र!॥ ५ ॥

**यदि मानिस चुपचाप बसिरह्यो, केही पनि गरेन भने के त्यो कर्मको त्याग भएन?**

भएन, जो मानिस चुपचाप बसेर अर्थात् इन्द्रियलाई केवल बाहिरबाट मात्रै रोकेर मनमा विषयको चिन्तन गरिरहन्छ, ऊ यसरी चुपचाप बस्नु कर्मको त्याग गर्नु होइन, बरू मूढबुद्धि हुनेहरू यसरी बस्नु मिथ्याचार हो॥ ६ ॥

**हजुरले जुन समबुद्धि बताउनुभयो, त्यसको प्राप्ति न त कर्मत्यागबाट हुन्छ, न त बाहिरबाट चुपचाप बसेर मनले विषयको चिन्तन गरेर नै हुन्छ, उसोभए त्यसको प्राप्ति कसरी हुन्छ?**

हे अर्जुन! जो मनुष्य मनले इन्द्रियलाई नियमन गरेर आसक्तिरहित भई इन्द्रियद्वारा कर्मयोग (निष्कामभावपूर्वक आफ्ना कर्तव्यकर्म)को आचरण गर्दछ, ऊ श्रेष्ठ हो, अर्थात् उसलाई समबुद्धि प्राप्त हुन्छ। यसर्थ, तिमीले शास्त्रविधिले संयमित गरिएका कर्तव्यकर्म गर, किनकि कर्म नगर्नुभन्दा उपर्युक्त विधिले कर्तव्यकर्म गर्नु श्रेष्ठ हो। अरु त के, कर्मविना तिम्रो शरीरको निर्वाह पनि हुँदैन॥ ७—८ ॥

**कर्म गर्दा बन्धन त हुँदैन, भगवान्?**

हुँदैन, यज्ञ (कर्तव्यकर्म) लाई केवल आफ्नालागि गर्दा मात्रै मानिस कर्महरूले बाँधिन्छ। यसर्थ, हे कुन्तीनन्दन! तिमी आसक्तिरहित भएर यज्ञ (कर्तव्यकर्म)लाई केवल कर्तव्यपरम्परा सुरक्षित राख्नका लागि मात्रै गर॥ ९ ॥

**मैले किन कर्म गरूँ?**

हे बन्धु, सर्गको सुरूआतमा पितामह ब्रह्माजीले पनि यज्ञ

(कर्तव्यकर्म) सहित मनुष्यको रचना गरी उनीहरूसित तिमीहरूले यही कर्तव्यकर्मरूपी यज्ञद्वाराबुद्धि आर्जन गर, यसले तिमीहरूलाई कर्तव्यपालनका लागि आवश्यक सामग्री प्रदान गरोस् भनेर भन्नुभएको थियो॥ १०॥

**हामीले यो यज्ञ कुन भावले गर्ने पितामह?**

यसमार्फत तिमीहरूले देवताहरूको वृद्धि (उन्नति) गर, उनीहरूले तिमीहरूको वृद्धि गरून्। यसप्रकार, एकअर्काको वृद्धि गर्नाले अर्थात्, आफ्नालागि कर्म नगरी केवल परहितका लागि सम्पूर्ण कर्म गर्नाले तिमीहरूले परमश्रेय (परमात्मा)लाई प्राप्त गर्ने छौ॥ ११॥

**पितामह, यदि हामीले यज्ञ गरेनौँ भने?**

तिम्रो कर्तव्यकर्मरूपी यज्ञद्वारा वृद्धि भएका देवताले तिमीहरूलाई नमागीकन पनि कर्तव्यपालका लागि चाहिँदो सामग्री दिइरहन्छन्, तर यदि तिमीहरूले त्यस कर्तव्यपालनको सामग्रीले देवतालाई पुष्ट नगरी स्वयम् सुख र आरामलाई भोग्यौ भने तिमीहरू चोर बन्ने छौ॥ १२॥

**यस दोषबाट कसरी बच्ने त भगवन्?**

मित्र, केवल अर्काको हितका लागि नै कर्तव्यकर्म गर्नाले यज्ञशेषका रूपमा समताको अनुभव हुन्छ। त्यस्तो समताको अनुभव गर्ने श्रेष्ठ मनुष्य सम्पूर्ण पापहरूबाट मुक्त हुन्छन्। तर, जसले केवल आफ्नो सुख र आरामका लागि नै सबै कर्म गर्दछन्, ती पापीहरूले केवल पाप मात्रै कमाउँछन्॥ १३॥

**भगवान्! भर्खरै हजुरले कर्तव्यकर्मको विषयमा ब्रह्माजीको आज्ञा सुनाउनुभयो, तर कर्तव्यकर्मका विषयमा हजुरको भन्नु के छ?**

यस विषयमा मेरो भन्नु के छ भने सृष्टिचक्रको सञ्चालनका लागि पनि कर्तव्यको आवश्यकता हुन्छ, किनकि सम्पूर्ण प्राणी अन्नकै कारण जन्मन्छन् भने अन्न वर्षाबाट उत्पन्न हुन्छ। वर्षा यज्ञ(कर्तव्यकर्म) बाटै हुन्छ भने यज्ञ निष्कामभावले गरिएका कर्महरूबाट हुन्छ। कर्तव्य गर्ने विधि वेदहरूले बताउँछन्, जो परमात्माबाट प्रकट हुन्छन्। यसर्थ, सर्वव्यापी परमात्मा यज्ञ (कर्तव्यकर्म) मै नित्य रहनुहुन्छ। उहाँको प्राप्ति आफ्नो कर्तव्यपालन गर्नाले हुन्छ। अतः आफ्नो कर्तव्यपालन मानिसका लागि सारै आवश्यक छ॥ १४—१५॥

**यदि कसैले सृष्टिचक्रको सुरक्षाका लागि आफ्नो कर्तव्यपालन गरेन भने नि?**

हे पार्थ! जुन मानिसले यस सृष्टिचक्रको परम्परालाई सुरक्षित राख्नका लागि कर्तव्यकर्म गर्दैन, त्यस्तो इन्द्रियहरूद्वारा भोग गर्ने र पापमय जीवन बिताउने मनुष्य संसारमा व्यर्थै बाँच्दछ, अर्थात् ऊ मर्दा पनि राम्रै हुन्छ॥ १६॥

**कोही आसक्तिरहित भएर केवल तपाईंको आज्ञाअनुसार सृष्टिचक्रलाई सुरक्षित गर्नका लागि नै कर्तव्यकर्मको पालन गऱ्यो भने नि?**

ऊ आफैँमा रमण गर्ने, आफैँमा तृप्त र आफैँमा सन्तुष्ट हुन जान्छ। उसका लागि फेरि केही गर्न बाँकी हुँदैन, किनकि त्यस महापुरूषलाई संसारमा न त कर्म गर्नुसित कुनै मतलब छ, न त कर्म नगर्नुसित नै कुनै मतलब रहन्छ। उसको कुनै पनि प्राणीसित कुनै पनि स्वार्थको सम्बन्ध हुँदैन॥ १७—१८॥

**म पनि यस्तो बन्न सक्छु, त भगवान्?**

अँ, बन्न सक्छौ। तिमी निरन्तर आसक्तिरहित भएर आफ्नो कर्तव्यको पालन राम्ररी गर, किनकि आसक्तिरहित भएर कर्म गर्नाले मनुष्यलाई परमात्माको प्राप्ति हुन्छ॥ १९ ॥

**सुरूमै आसक्तिरहित भएर के कसैले कर्म गरेको छ र उसलाई परमात्माको प्राप्ति भएको छ त?**

भएको छ, राजा जनकजस्ता अनेक महापुरूषले कर्तव्य निर्वाह गरेर नै परमात्मालाई प्राप्त गरेका थिए। परमात्माको प्राप्तिपछि पनि उनीहरूले लोकसङ्ग्रह (दुनियाँलाई कुमार्गबाट बचाएर सत्मार्गमा ल्याउन) का लागि कर्म गरेका छन्। यसर्थ, तिमी पनि लोकसङ्ग्रहलाई ध्यानमा राखेर आफ्नो कर्तव्य निर्वाह गर॥ २० ॥

**त्यो लोकसङ्ग्रह कसरी हुन्छ त?**

दुई प्रकारले हुन्छ—आफ्नो कर्तव्यपरायणताले र आफ्नो वचनहरूबाट। श्रेष्ठ मनुष्यले जेजे आचरण गर्दछ, सामान्य मानिसले पनि त्यस्तै गर्दछन्। उसले आफ्नो बोलीले जे प्रमाणित गर्दछ, अरुले पनि त्यसैको अनुसरण गर्दछन्॥ २१ ॥

**जसरी हजुरले परमात्माप्राप्तिको विषयमा जनक आदिको उदाहरण दिनुभयो, त्यसरी नै लोकसङ्ग्रहको विषयमा पनि के कुनै उदाहरण छ?**

छ, मेरै उदाहरण लेऊ। पार्थ! यस त्रिलोकमा मैले गर्नुपर्ने कुनै पनि काम बाँकी छैन र पाउन योग्य कुनै वस्तु पाउन बाँकी पनि छैन, तापनि मैले लोकसङ्ग्रहका लागि कर्तव्य निर्वाह गर्दछु॥ २२ ॥

**हजुरले कर्तव्य निर्वाह गर्न किन आवश्यक छ, भगवान्?**

हो पार्थ, आवश्यक छ, किनकि यदि म अल्छी भएर कर्म गरिनँ भने मानिसले सम्पूर्ण तरिकाले मेरै अनुसरण गर्न पुग्छन्,

अर्थात् उनीहरूले पनि कर्तव्य निर्वाह गर्न छाडिदिन्छन्॥ २३॥

**यसबाट के हुन्छ, भगवान्?**

यदि मैले कर्म गरिनँ भने आआफ्नो कर्तव्य निर्वाह नगर्नाले यी सबै मानिस नष्ट—भ्रष्ट हुने छन् भने म पनि सबै किसिमका सङ्कर दोषहरू पैदा गरी सम्पूर्ण प्रजाहरूलाई नष्ट गर्ने बन्न पुग्छु॥ २४॥

**यस दृष्टिले हजुरले लोक सङ्ग्रहका लागि कर्म गर्न अत्यन्त जरूरी छ, तर तत्त्वज्ञ जीवन्मुक्त महापुरुषहरूका लागि पनि कर्म गर्न आवश्यक छ र?**

छ नि अर्जुन ! जरूरी मात्रै होइन, अति जरूरी छ। जसरी मानिसले कर्ममा आसक्त भएर फलको इच्छासाथ तत्परतापूर्वक कर्म गर्दछन्, त्यसैगरी आसक्तिरहित ज्ञानी महापुरूषहरूले पनि तत्परतासाथ कर्म गर्नुपर्दछ। ज्ञानीहरूले कर्महरूमा आसक्त अज्ञानीका बुद्धिमा कुनै पनि भ्रम पैदा नगरी स्वयम् पनि निकै सावधान भएर गरून् र त्यस्तै कर्म गराऊन्॥ २५—२६॥

**अज्ञानी र ज्ञानी दुवैले कर्म गर्नुमा के फरक छ?**

सम्पूर्ण कर्म सबै प्रकारले प्रकृतिको गुणद्वारा गरिन्छ, तर अहङ्कारले मोहित अन्तःकरण भएको अज्ञानी मानिसले 'म कर्ता हुँ' भन्ने ठान्दछ भने हे महाबाहो! गुणविभाग र कर्मविभागलाई* गहिराइमा बुझेको ज्ञानी महापुरूषले 'सबै गुण नै गुणमा छन्,

* सत्त्व, रज र तम—यी तीन गुणहरूको कार्य हुनाले शरीर, इन्द्रिय, मन, बुद्धि, प्राणी, पदार्थ आदि सबै संसार 'गुण—विभाग' हो भने त्यसमा हुने सबै क्रियाहरू 'कर्मविभाग' हुन्।

अर्थात् सम्पूर्ण क्रियाहरू प्रकृतिमै भइरहेका छन्'—भन्ने ठानेर तिनमा आसक्त हुँदैनन्॥ २७—२८॥

**जति जिम्मेवारी तपाईंमा छ, त्यति नै जिम्मेवारी के ज्ञानी महापुरूषमाथि पनि हुन्छ?**

अहँ, हुँदैन। ज्ञानी महापुरूषले अज्ञानीले जसरी काम नगर्दा पनि केही हुँदैन, तर उसले कुनै पनि तरिकाले कमसे कम प्रकृतिजन्य गुणहरूले मोहित र गुण तथा कर्महरूमा आसक्त अज्ञानीहरूलाई विचलित नगरोस्॥ २९॥

**तर म त विचलित हुन्छु, के गरूँ भगवान्?**

तिमीले विवेकशील बुद्धिद्वारा सम्पूर्ण कर्मलाई ममा अर्पण गरी कामना, ममता र सन्तापरहित भएर युद्ध (कर्तव्यकर्म) गर॥ ३०॥

**सबै कर्मलाई हजुरमा अर्पण गर्नाले के हुन्छ र?**

जुन मानिस दोषदृष्टिले रहित भएर श्रद्धापूर्वक सधैँ मेरो यही विचारबमोजिम हिँड्छन्, उनीहरू पनि सम्पूर्ण कर्मका बन्धनबाट मुक्त हुन्छन्॥ ३१॥

**तर, जो हजुरले भनेअनुसार हिँड्दैनन्, उनीहरूको के हुन्छ?**

जसले मेरो यस विचारमा दोष देखेर तदनुसार गर्दैनन्, ती सांसारिक ज्ञानमा मोहित र पारमार्थिक ज्ञानले रहित अविवेकी मानिसलाई तिमीले नष्ट भए भन्ने ठान॥ ३२॥

**हजुरले भनेअनुसार नहिँड्दा उनीहरूको नाश (पतन) किन हुन्छ?**

ज्ञानीले त आफ्नो रागद्वेषरहित शुद्ध स्वभावअनुसार क्रिया गर्दछन्, तर ती मानिसले त रागद्वेषयुक्त दूषित स्वभावअनुसार

कर्म गर्दछन्, यसर्थ शास्त्रमर्यादाअनुसार कर्म गर्नु उनीहरूको वशमा हुँदैन, जबर्जस्ती चल्दैन। यसप्रकार, आफ्नो दूषित स्वभावको वशमा हुनाले उनीहरूको पतन हुन्छ॥ ३३ ॥

**यो पतनबाट बच्ने उपाय के छ, भगवान्?**

प्रत्येक इन्द्रियका विषयमा रागद्वेषहरू अनुकूलता र प्रतिकूलतावश रहेका छन्, यसर्थ, मनुष्यले रागद्वेषले वशीभूत भएर कर्म नगरोस्, किनकि यी दुवै मानिसका शत्रु हुन्॥ ३४॥

**उसोभए, मानिसले के गर्नुपर्दछ?**

आफ्नो धर्म(कर्तव्य)को पालन गर्नुपर्दछ। गुणहरूको कमी भए पनि आफ्नो धर्म श्रेष्ठ हुन्छ। आफ्नो धर्मको पालन गर्दागर्दै यदि मृत्यु भयो भने पनि त्यो(आफ्नो धर्मको पालन) कल्याणकारक हुन्छ। तर, अर्काको धर्म जतिसुकै गुणयुक्त किन नहोस्, त्यो भयप्रद हुन्छ॥ ३५ ॥

**अर्जुनले भने— यदि आफ्नो धर्मको पालन गर्नु नै श्रेष्ठ हो भने मानिस नचाहँदा पनि बलपूर्वक कसद्वारा प्रेरित भएर अधर्म र पापको आचरण गर्दछ त?॥ ३६ ॥**

भगवान्ले भन्नुभयो—रजोगुणबाट उत्पन्न हुने काम(कामना)लाई नै तिमीले पाप गर्नेवाला भन्ने जान। यही कामबाट क्रोध पैदा हुन्छ। यो काम कहिल्यै पनि तृप्त नहुने महापापी छ, यस विषयमा तिमीले त्यस कामलाई वैरी ठान॥ ३७॥

**यो महापापी कामले के गर्दछ?**

जसरी धुवाँले अग्निलाई, धूलोले ऐनालाई र सालले गर्भलाई ढाकिदिन्छ, त्यसरी नै यो काम (कामना) ले पाप गर्न हुँदैन भन्ने इच्छालाई दबाएर मानिसलाई पापतिर लगाउँछ। हे कुन्तीनन्दन!

यो काम अग्निसमान कहिल्यै नअघाउने र विवेकी साधकहरूको नित्य वैरी हो। यो कामद्वारा मानिसको विवेक ढाकिन्छ॥ ३८—३९ ॥

**यस्तो काम आखिर रहन्छ कहाँ?**

त्यो काम इन्द्रिय, मन र बुद्धि, यी तीन ठाउँमा रहन्छ र इन्द्रिय आदिद्वारा देहाभिमानी मनुष्यको ज्ञानलाई ढाकेर त्यसलाई मोहित गरिदिन्छ॥ ४० ॥

**त्यस कामको नाश कसरी गर्न सकिन्छ?**

हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन! तिमीले सबैभन्दा पहिले इन्द्रियहरूलाई वशमा गरेर यो ज्ञान र विज्ञानलाई ढाकिदिने महापापी कामलाई अवश्य पनि मारिदेऊ॥ ४१ ॥

**हजुरले जुन उपाय बताउनुभयो, त्यसलाई व्यवहारमा कसरी लागु गरौँ, भगवान्?**

शरीरभन्दा पर इन्द्रिय छन्, इन्द्रियभन्दा पर मन छ भने मनभन्दा पर बुद्धि छ*। यसप्रकार, कामलाई बुद्धिभन्दा पर ठानेर आफूद्वारा आफैँलाई वशमा गरेर हे महाबाहो! तिमीले यस दुर्जय शत्रु कामलाई मारिदेऊ॥ ४२-४३ ॥

---

* काम अहं(कर्ता) मा रहन्छ, यसर्थ कर्ताको पदार्थ आदिमा आकर्षण हुन्छ। अहंमा पहिलो त प्रकृतिको अंश(जड अंश) छ भने अर्को परमात्माको अंश (चेतन अंश) छ। प्रकृतिको अंश स्वाभाविकरूपमा प्रकृतितिर र परमात्माको अंश स्वाभाविकरूपमा परमात्मातर्फ (सजातीयता हुनाले) तानिन्छ। तसर्थ, अहंको जड-अंशमा काम रहन्छ भने चेतनअंशमा तत्त्व—जिज्ञासा, प्रेमपिपासा आदि रहन्छ।

॥ श्रीपरमात्मने नमः ॥

# चौथो अध्याय

**भर्खरै हजुरले जुन कर्मयोगमा काम ( कामना ) को नाशका लागि प्रेरित गर्नुभयो, त्यो कर्मयोगको परम्परा के हो ?**

भगवान्‌ले भन्नुभयो—यस अविनाशी योगलाई सुरूमा मैले सूर्यसित भनेको थिएँ। सूर्यले त्यसपछि आफ्ना पुत्र मनुसित र मनुले आफ्ना पुत्र इक्ष्वाकुसित भनेका थिए। यसप्रकारले हे परंतप! परम्परादेखि चल्दै आएको यस योगलाई राजर्षिहरूले जाने, तर धेरै लामो समय बितेका कारण यो योग यस मनुष्यलोकमा लुप्तप्रायः भएको छ। तिमी मेरा भक्त र प्रिय साथी हौ, यसर्थ त्यही पुरातन योग आज मैले तिमीसित भन्दै छु, जुन उत्तम रहस्यको कुरा हो॥ १—३ ॥

अर्जुनले भने—भगवान्, जुन सूर्यलाई तपाईंले उपदेश दिनुभएको थियो, ती त धेरै पहिला उत्पन्न भएका थिए, जबकि तपाईंको जन्म (अवतार) त अहिले भएको छ। अतः मैले कसरी जानूँ कि तपाईंले नै सृष्टिको सुरूआतमा सूर्यलाई उपदेश दिनुभएको थियो ?॥ ४ ॥

भगवान्‌ले भन्नुभयो—परंतप अर्जुन! यो कुरा मेरो यही जन्म (अवतार)को होइन। मेरो र तिम्रो धेरै जन्म भइसकेका छन्। ती

सबैलाई म जान्दछु, अर्थात् कुनकुन जन्ममा मैले र तिमीले केके गर्‍यौं, ती सबै कुरा म जान्दछु, तर तिमीले आफ्नो जन्म र कर्मलाई जान्दैनौ॥ ५॥

**जसरी मेरो जन्म भएको छ, त्यसरी हजुरको जन्म भएको होइन र?**

होइन। म अजन्मा, अविनाशी तथा सम्पूर्ण प्राणीहरूको ईश्वर रहँदै आफ्नो प्रकृतिलाई वशमा राखेर आफ्नो योगमायाले प्रकट हुन्छु॥ ६॥

**हजुर प्रकट हुने अवसर कुनचाहिँ हो त?**

हे भरवंशी अर्जुन! जबजब धर्मको हानि र अधर्मको वृद्धि हुन्छ, तबतब मैले अवतार लिन्छु॥ ७॥

**हजुरको अवतार ग्रहण गर्ने प्रयोजन के हो?**

साधु(भक्त)हरूको रक्षा, दुष्टहरूको विनाश र धर्मको समुचित स्थापना गर्नका लागि मैले समय समयमा अवतार लिने गर्दछु॥ ८॥

**यसरी बारम्बार जन्म (अवतार) लिँदा के तपाईं बाँधिनुहुन्न?**

बाँधिन्न अर्जुन, मेरा जन्म र कर्म दिव्य छन्। आफ्नो केही पनि स्वार्थ नराखी केवल दुनियाको हित गर्नका लागि नै म प्रकट हुन्छु। यसलाई जसले तत्त्वले जान्दछ, उसले शरीर छुटेपछि पनि पुनर्जन्म नलिइकन मलाई प्राप्त गर्दछ॥ ९॥

**हजुरलाई नै प्राप्त गर्दछ भन्ने प्रमाण के छ?**

अवश्य, जो ममा नै तल्लीन छन् र ममा नै आश्रित भएका छन्, यस्ता थुप्रै मानिस ज्ञानले अर्थात् मेरो जन्म र कर्मको

दिव्यतालाई गहिराइसाथ जान्नाले पवित्र भएर राग, भय र क्रोधमुक्त हुँदै मलाई प्राप्त गरेका छन्॥ १०॥

**ती कुन भावले हजुरमा आश्रित हुन्छन्?**

हे पार्थ! जो मानिस संसारदेखि विमुख भएर जुन भावले मेरो शरणमा आउँछन्, म पनि उनीहरूका साथमा त्यही भावका साथ व्यवहार गर्दछु। मेरो यस व्यवहारको प्रभाव संसारका मानिसमा गहिरोसित पर्दछ, जसले गर्दा उनीहरू पनि स्वार्थ र अभिमान त्यागेर परहित गर्न तत्पर हुन्छन्॥ ११॥

**हजुर आफ्नो शरणमा आउनेहरूका लागि यति अनुकूल हुनुहुन्छ, तापनि मानिस हजुरलाई छोडेर देवताहरूको उपासना किन गर्दछन्?**

उनीहरूभित्र संसारको महत्त्व भएका हुनाले कर्मजन्य सिद्धि चाहन्छन्। यसर्थ, तिनले मलाई छोडेर देवताहरूको उपासना गर्दछन्, किनकि मनुष्यलोकमा कर्मजन्य सिद्धि छिटो हुन्छ॥ १२॥

**जसरी मानिस कर्मजन्य सिद्धिको उद्देश्यले देवताहरूको उपासना गर्दछन् अथवा शुभकर्म गर्दछन्, यसैगरी हजुरले पनि त कुनै फलको उद्देश्यले कुनै कार्य गर्नुहुन्छ होला नि त?**

मैले जीवहरूको गुण र कर्मअनुसार चारै वर्ण (ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र) को रचना गर्दछु। तर, मैले यस सृष्टिको रचना आदि काम कर्तृत्व र फलेच्छारहित भएर नै गर्दछु। यसर्थ, ती कर्मले मलाई बाँध्दैनन्। त्यतिमात्रै होइन, यसरी मलाई तत्त्वपूर्वक जान्नेहरू पनि कर्मले कहिल्यै बाँधिदैनन्*॥ १३-१४॥

* जसरी भगवान् फलेच्छारहित भएर कर्म गर्नुहुन्छ, त्यसैगरी हामीले पनि फलको इच्छालाई छोडेर कर्म गर्नु छ भन्ने जानेर जसले कर्म गर्दछ, ऊ कर्महरूले बाँधिँदैन।

**यस्तो तरिकाले कसैले कर्म गरेको पनि छ र?**

छ नि पहिला जोजो मुमुक्षुहरू भए, उनीहरूले पनि यसरी (कर्मतत्त्वलाई) जानेर कर्म गरेका छन्। यसर्थ, तिमी पनि पूर्वजहरूद्वारा सधैँ गरिने कर्महरूलाई उनीहरूले झैं गर॥ १५॥

**जुन कर्मलाई मुमुक्षुहरूले गरेका छन् र जुन कर्मलाई गर्नका लागि तपाईंले आदेश दिइरहनुभएको छ, त्यो कर्म के हो?**

कर्म के हो र अकर्म के हो, यस विषयमा ठूलाठूला विद्वान्हरू पनि अलमलिन्छन्। अब मैले त्यही कर्मतत्त्व तिमीलाई बताउँछु, जसलाई जानेर तिमी संसारबन्धनबाट मुक्त हुने छौ। त्यो कर्म तीन किसिमको छ—कर्म, अकर्म र विकर्म। यी तीनै तत्त्वलाई अवश्य पनि जान्नुपर्दछ, किनकि कर्मको रहस्य निकै गहन(गहिरो) छ॥ १६—१७॥

**कर्म र अकर्मका तत्त्वलाई जान्नु भनेको के हो?**

कर्ममा अकर्म देख्नु र अकर्ममा कर्मलाई देख्नु अर्थात् कर्म गर्दै निर्लिप्त रहनु र निर्लिप्त रहँदै कर्म गर्नु—यस्तो तरिकाले सम्पूर्ण कर्म गर्नेवाला नै योगी हो, बुद्धिमान् हो॥ १८॥

**त्यो बुद्धिमान् को हो?**

जसका सम्पूर्ण कर्म सङ्कल्प र कामनाले रहित हुन्छन् तथा जसका सम्पूर्ण कर्म ज्ञानाग्निले जल्दछन्, उसलाई ज्ञानीहरूले पनि पण्डित (बुद्धिमान्) भन्दछन् अर्थात् यही उसको बुद्धिमानी हो॥ १९॥

**यस्तो पुरुषको अवस्था कस्तो हुन्छ?**

ऊ कर्म तथा कर्मफलको आसक्ति तथा आश्रयले रहित हुन्छ अनि सधैँ तृप्त रहन्छ। यसर्थ, उसले सबै कुरा गरेर पनि वास्तवमा केही पनि गर्दैन॥ २०॥

**यदि कुनै साधक निवृत्तिपरायण छ भने?**

शरीर र अन्तःकरणलाई वशमा गर्ने, सबै प्रकारका सङ्ग्रहलाई त्याग्ने र संसारको आशाले रहित साधक शरीरसम्बन्धी कर्म मात्रै गर्दा पनि बाँधिँदैन॥ २१ ॥

**यदि कुनै साधक निवृत्तिपरायण छ भने नि?**

ऊ पनि जस्तो परिस्थिति आउँछ, त्यसैमा सन्तुष्ट रहन्छ, ईर्ष्या र द्वन्द्वहरूदेखि टाढा हुन्छ र सिद्धि—असिद्धिमा समान रहँदै कर्म गर्दा पनि बाँधिँदैन। यति मात्रै होइन, जो आसक्तिरहित र स्वाधीन छ, तथा जसको निश्चय केवल परमात्मालाई प्राप्त गर्नु छ, यस्तो यज्ञका लागि मात्रै कर्म गर्ने साधकका सम्पूर्ण कर्म विलीन(अकर्म) हुन्छन्॥ २२—२३ ॥

**त्यो यज्ञ कति प्रकारको हुन्छ, भगवान्?**

१–जसमा सम्पूर्ण करण, उपकरण, सामग्री, क्रिया, कर्ता आदि ब्रह्मस्वरूप हुन्छन्, त्यो 'ब्रह्मयज्ञ' हो।

२–जसमा सम्पूर्ण पदार्थ, क्रिया आदि ममा अर्पण हुन्छन्, त्यो 'भगवदर्पणरूप यज्ञ' हो।

३–जसमा साधकले आफूले आफूलाई ब्रह्ममा एक गरिदिन्छ, त्यो 'अभिन्नतारूप यज्ञ' हो।

४–जसमा साधकले आफ्ना सम्पूर्ण इन्द्रियलाई संयमित गर्दछ, तिनलाई आआफ्ना विषयहरूबाट हटाउँछ, त्यो 'संयमरूप' यज्ञ हो।

५–जसमा साधक रागद्वेषरहित इन्द्रियहरूले विषयभोग गर्दछ, त्यो 'विषय—हवनरूप यज्ञ' हो।

६–प्राण, इन्द्रिय र मनका क्रियाहरूलाई रोकेर बुद्धिको

जागरणसँगै निर्विकल्प हुनु 'समाधिरूप यज्ञ' हो।

७-लोकोपकारका लागि आफ्नो धन खर्च गर्नु 'द्रव्ययज्ञ' हो।

८-आफ्नो धर्म पालन गर्दा जे कठिनता आउँछ, त्यसलाई प्रसन्नतासाथ सहनु 'तपोयज्ञ' हो।

९-कार्यको सिद्धि अथवा असिद्धिमा एवम् फलको प्राप्ति वा अप्राप्तिमा सम रहनु 'योगयज्ञ' हो।

१०-सत्शास्त्रको पठनपाठन तथा नामजप आदि गर्नु 'स्वाध्यायरूप ज्ञानयज्ञ' हो।

११-पूरक, कुम्भक र रेचकपूर्वक* प्राणायाम गर्नु 'प्राणायामरूप यज्ञ' हो।

१२-नियमित आहार गर्दै प्राणहरूलाई आआफ्ना ठाउँमा रोकिदिनु 'स्तम्भवृत्ति प्राणायामरूप यज्ञ' हो।

यी सम्पूर्ण यज्ञ केवल कर्मसित सम्बन्ध—विच्छेद गर्नका लागि हुन् भन्ने जानेर यिनको अनुष्ठान गर्ने साधकका सबै पाप नाश हुन्छन्॥ २४—३०॥

**पापनाश भएपछि के हुन्छ, भगवान्?**

के कुरुश्रेष्ठ! ती यज्ञ गर्नेहरूलाई अमृतस्वरूप परमात्माको प्राप्ति हुन्छ। तर, जसले यज्ञ नै गर्दैन, उसका लागि यो मनुष्यलोक पनि लाभदायक हुँदैन भने परलोक त झन् कसरी लाभदायक होला र?॥ ३१॥

**यस्तो यज्ञको वर्णन अन्त कहाँ भएको छ?**

* सासलाई भित्र ल्याउनु पूरक, सासलाई भित्र रोक्नु कुम्भक र सासलाई बाहिर निकाल्नु रेचक हो।

यस्ता अनेक यज्ञको वर्णन वेदहरूमा सविस्तार भएको छ। ती सबै यज्ञलाई तिमीले कर्मजन्य(कर्मबाट हुने) मान। यस्तो मानेर कर्म गर्नाले तिमी कर्मबन्धनबाट मुक्त हुन्छौ॥ ३२॥

**सबै यज्ञमध्ये श्रेष्ठ यज्ञ कुन हो, प्रभो?**

हे परंतप! ती सबै कर्मजन्य यज्ञभन्दा 'ज्ञानयज्ञ' श्रेष्ठ हो, किनकि ज्ञानयज्ञमा सम्पूर्ण सम्पूर्ण कर्म र पदार्थ समाप्त हुन्छन्॥ ३३॥

**त्यो ज्ञान कसरी पाउने त?**

त्यो ज्ञान पाउनका लागि तिमी ज्ञानी तत्त्वदर्शी महापुरुषनजिक आऊ, तिनको चरणमा दण्डवत् गर, उनीहरूको सेवा गर र उनीहरूसित सादर जिज्ञासाका विषयमा प्रश्न गर, तब उनीहरूले तिमीलाई ज्ञानको उपदेश गर्ने छन्॥ ३४॥

**उनीहरूले दिएको ज्ञानले के हुन्छ?**

हे अर्जुन! त्यो ज्ञान प्राप्त भएपछि तिमीलाई फेरि कहिल्यै मोह रहने छैन भने त्यस ज्ञानले तिमीले सबै प्राणीलाई पहिला आफूमा देख्ने छौ र त्यसपछि ममा देख्ने छौ, अर्थात् सबैतिर एक परमात्मातत्त्वकै अनुभव गर्ने छौ॥ ३५॥

**यो ज्ञानको के अर्को पनि केही महिमा छ?**

छ, यदि तिमी सम्पूर्ण पापीमध्ये पनि पापी छौ भने पनि तिमी ज्ञानरूपी डुँगाको सहारामा निश्चितरूपमा सम्पूर्ण पापहरूबाट मुक्त हुन्छौ॥ ३६॥

**जसरी डुँगाबाट समुद्र तरेपछि पनि समुद्र त रहन्छ नै, त्यसैगरी पापहरूबाट मुक्त भएपछि पनि पापहरू त बाँकी नै रहन्छन् होला, हगि?**

अहँ, जसरी प्रज्वलित अग्निले दाउरालाई सम्पूर्णरूपमा

खरानी बनाइदिन्छ, त्यसैगरी ज्ञानरूपी अग्निले सम्पूर्ण कर्म (पाप) लाई भस्म बनाइदिन्छ। तसर्थ, यस मनुष्यलोकमा ज्ञानसमान पवित्र केही छैन। त्यही ज्ञानलाई कर्मयोगद्वारा सिद्ध गरेको मानिसले आफूमै प्राप्त गर्दछ॥ ३७-३८॥

**जुन ज्ञान कर्मयोगले सिद्ध भएको मानिसलाई स्वयमेव प्राप्त हुन्छ, त्यो ज्ञान अन्य साधकलाई कसरी प्राप्त हुन्छ?**

इन्द्रियलाई वशमा गर्ने, साधनपरायण अनि श्रद्धावान् साधकलाई त्यो ज्ञान प्राप्त हुन्छ र ज्ञान प्राप्त गरेपछि तुरुन्तै परमशान्ति प्राप्त हुन्छ॥ ३९॥

**यो ज्ञान पाउनका लागि के बाधक हुन्छ?**

जसले आफैँलाई जान्दैन र अरूप्रति श्रद्धा गर्दैन, अर्काका कुरा सुन्दैन अनि जसभित्र संशय मात्रै छ, त्यस्तो मानिसको पतन हुन्छ। यस्तो संशयशील मनुष्यका लागि न त यो लोक सुखदायी हुन्छ, न परलोक नै॥ ४०॥

**संशय नष्ट भएपछि के हुन्छ?**

हे धनञ्जय! जसले समताका माध्यमले सम्पूर्ण कर्महरूबाट सम्बन्ध विच्छेद गरेको छ र ज्ञान(कर्मतत्त्वको ज्ञान)द्वारा सम्पूर्ण संशयको नाश गरेको छ, यस्तो स्वरूपपरायण मानिसलाई कर्मले बाँध्दैनन्। अतः हे भरतवंशी अर्जुन! तिमीले हृदयमा रहेको अज्ञानबाट उत्पन्न हुने संशयलाई ज्ञानरूपी तरबारले छेदन गरेर समतामा बस र युद्ध(कर्तव्यपालन)का लागि उठ॥ ४१—४२॥

॥ श्रीपरमात्मने नमः ॥

# पाँचौँ अध्याय

**अर्जुनले भने—हे कृष्ण ! कहिले तपाईं कर्मको त्याग अर्थात् साङ्ख्ययोगको प्रशंसा गर्नुहुन्छ भने कहिले कर्मयोगको। यी दुईमध्ये जुन निश्चितरूपमा कल्याणकारी छन्, ती मेरालागि भन्नुस्॥ १ ॥**

भगवान्ले भन्नुभयो—साङ्ख्ययोग र कर्मयोग, यी दुवै श्रेष्ठ छन्, तर यी दुईमध्ये साङ्ख्ययोगभन्दा कर्मयोग श्रेष्ठ छ॥ २ ॥

**किन कर्मयोग श्रेष्ठ छ, प्रभो ?**

हे महाबाहु! जसले कसैसित पनि राग र द्वेष गर्दैन, त्यस्तो कर्मयोगी नित्य सन्न्यासीजस्तै हो, किनकि द्वन्द्वमुक्त हुनाले ऊ सुखसाथ संसार—बन्धनबाट मुक्त हुन्छ॥ ३ ॥

**हजुरले दुवै श्रेष्ठ छन् भन्नुभयो, त्यसोभए दुवैको फलप्राप्तिमा कुनै भेद छैन ?**

नबुझेकाले मात्रै साङ्ख्ययोग र कर्मयोगलाई भिन्नभिन्न फल दिने भन्ने हुन्, पण्डित (बुद्धिमान्) हरूले होइन, किनकि यी दुईमध्ये कुनै एउटामा रहनाले पनि दुवैका फललाई प्राप्त गर्न सकिन्छ, अर्थात् जुन फल साङ्ख्ययोगीलाई प्राप्त हुन्छ, त्यही फल कर्मयोगीलाई पनि प्राप्त हुन्छ। यसर्थ, जसले साङ्ख्ययोग र कर्मयोगको फललाई एउटै देख्छ, उसले ठीक देख्छ॥ ४-५ ॥

**यदि दुवैको फल एउटै हुन्छ भने कर्मयोग श्रेष्ठ किन भयो ?**

हे महाबाहो! कर्मयोगविना अर्थात् सिद्धि—असिद्धिमा समान नभईकन साङ्ख्ययोग सिद्ध हुनु (समरूप स्वरूपमा रहनु) कठिन

हुन्छ। तर, मननशील कर्मयोगी( सिद्धि—असिद्धिमा समान भएर)ले छिटै समरूप ब्रह्मलाई प्राप्त गर्दछ॥ ६ ॥

**उसले कर्मयोगबाट ब्रह्मलाई कसरी प्राप्त गर्दछ?**

इन्द्रियहरूलाई जितेको, अन्तःकरण पवित्र भएको, शरीरलाई वशमा गरेको एवम् सम्पूर्ण प्राणीमा आफूलाई देख्ने खालको कर्मयोगी कर्म गर्दागर्दै पनि कर्ममा लिप्त हुँदैन, अर्थात् परमात्मालाई प्राप्त गर्दछ॥ ७ ॥

**साङ्ख्ययोगी कर्मबाट कसरी निर्लिप्त रहन्छ?**

सत्—असत्‌का तत्त्वलाई जानेर सत्‌मा रहने साङ्ख्ययोगी देखेर, सुनेर, स्पर्श गरेर, सुँघेर, खाएर, गएर, सुतेर, सास लिएर, बोलेर, मलमूत्र त्यागेर, ग्रहण गरेर, आँखा खोलेर अथवा मिचेर पनि 'इन्द्रियहरू नै आफैँ काम गर्दै छन्' भन्ने ठान्दछ र 'मैले केही पनि गर्दिनँ' भन्ने अनुभव गरेर कर्महरूदेखि निर्लिप्त हुन्छ॥ ८–९ ॥

**कर्मयोगी र साङ्ख्ययोगी दुवै कर्महरूद्वारा निर्लिप्त रहन्छन्। यसरी निर्लिप्त रहने अरु पनि कुनै उपाय छ र?**

छ नि, भक्तियोग। भक्तियोगीले आसक्तिको त्याग गरेर अथवा सम्पूर्ण कर्मलाई भगवान्‌मै अर्पण गरेर गर्दछ। तसर्थ, ऊ पनि पानीमा कमलको पातझैं पाप एवम् कर्महरूले लिप्त हुँदैन॥ १० ॥

**भगवान्! भक्तियोगीले त हजुरमा समर्पणको उद्देश्यले कर्म गर्दछ, त्यसैले कर्ममा लिप्त हुँदैन, तर कर्मयोगी कुन उद्देश्यले कर्म गर्दा लिप्त हुँदैन?**

कर्मयोगी इन्द्रियहरू, शरीर, मन र बुद्धिका साथमा ममता

नराखीकन फलासक्तिलाई त्यागेर केवल अन्त:करणको शुद्धिका लागि मात्रै कर्म गर्दछ। अत: कर्मयोगीले कर्मफलको इच्छा त्यागेर सदा रहने परमशान्तिलाई प्राप्त गर्दछ। तर, जो योगी छैन, ऊ कामनाका कारण कर्मफलमा आसक्त भएर बाँधिन्छ॥ ११-१२॥

**साङ्ख्योगीले गर्ने कर्म कसरी सम्पन्न हुन्छन्?**

शरीर, इन्द्रिय र मनलाई वशमा राखेको साङ्ख्ययोगीले मनैदेखि सम्पूर्ण कर्महरूलाई नौ ढोका भएको शरीरको जिम्मा लगाउँदै नगरी र नगराईकन सुखपूर्वक आफ्नो स्वरूपमा रहन्छ॥ १३॥

**साङ्ख्ययोगीले त न कर्म गर्छ, न गराउँछ, तर परमात्माले त गराउनुहुन्छ होला?**

परमात्माले न त कुनै मानिसको कर्तापनको रचना गर्नुहुन्छ, न कसैबाट कर्म गराउनुहुन्छ र न त कसैसित सम्बन्ध नै जोड्नुहुन्छ। तर, मानिसले आआफ्नो स्वभाव(बानी)अनुसार नै कर्म गर्दछन् र आफूलाई ती कर्मका कर्ता ठान्दछन्। त्यसोभएपछि कर्मफलसित स्वत: सम्बन्ध भइहाल्छ॥ १४॥

**परमात्माले कसैको कर्तापन आदिको रचना त गर्नुहुन्न, तर प्राणीहरूका कर्मफललाई त ग्रहण गर्नुहुन्छ होला?**

सर्वव्यापी परमात्माले कसैको पनि पाप र पुण्यकर्मलाई ग्रहण गर्नुहुन्न, तर अज्ञानद्वारा स्वरूपको ज्ञान ढाकिएको हुनाले ती जीव मोहित हुन्छन्, अर्थात् आफूलाई कर्मका भोक्ता ठान्छन्, जसले गर्दा ती जन्मने र मर्ने गरिरहन्छन्॥ १५॥

**त्यसोभए, सबै जीव यसैगरी आफूलाई कर्ताभोक्ता ठानेर मोहित भइरहन्छन्?**

होइन, जसले ज्ञान(विवेक)द्वारा आफ्नो अज्ञान नाश गरेका छन्, उनीहरूको सूर्यको जस्तै ज्ञानले उनीहरूलाई कर्तृत्व र भोक्तृत्वरहित तुल्याई परमात्मालाई प्रकाशित गरिदिन्छ, अर्थात् तिनलाई परमात्माको अनुभव गराइदिन्छ॥ १६ ॥

**त्यस्ता परमात्मातत्त्वको अनुभव अरु कसलाई हुन्छ?**

जसको बुद्धि र मन तदाकार भएका छन्, जसको स्थिति परमात्मातत्त्वमा छ, यस्ता परमात्मापरायण साधक ज्ञानले पापपुण्यरहित भएर परमात्मालाई प्राप्त गर्दछन्, उनीहरूको पुनर्जन्म हुँदैन॥ १७॥

**जसले परमात्मालाई प्राप्त गरेका हुन्छन्, ती महापुरुषको ज्ञान व्यवहारमा चाहिँ कस्तो हुन्छ नि?**

ती तत्त्वज्ञ महापुरुषहरूले विद्या—विनयसम्पन्न ब्राह्मणहरू एवम् चाण्डालहरू अनि हात्ति र कुकुरहरूमा पनि उस्तै परमात्माको दर्शन गर्दछन्, न कि खानपान आदि व्यवहारमा उनीहरूजस्तै हुन्छन्॥ १८ ॥

**समदर्शी भएपछि के हुन्छ?**

जसको मन सर्वथा साम्यावस्थामा अर्थात् परमात्मातत्त्वमा स्थित भएको छ, उनीहरूले यहीँ(बाँच्दाबाँच्दै) संसारलाई जितेका हुन्छन् अर्थात् उनीहरू संसारभन्दा माथि उठेका हुन्छन्, किनकि ब्रह्म निर्दोष र सम हुन्छ, यसर्थ उनीहरू समरूप ब्रह्ममा नै स्थित रहन्छन्॥ १९ ॥

**यस्तो साम्यावस्थामा स्थित हुने उपाय के हो?**

व्यवहारमा प्रिय—अप्रिय अर्थात् अनुकूल—प्रतिकूल परिस्थिति आउँदा पनि जसले हर्ष र शोक गर्दैन, त्यो मोहरहित, स्थिरबुद्धि भएको र ब्रह्मलाई जान्ने मानिस परमात्मामै स्थित हुन्छ॥ २० ॥

**यो स्थिति कुन क्रमले प्राप्त हुन्छ, भगवान्?**

जसले बाह्य वस्तुमा आसक्ति राख्दैन, उसले पहिला आफैँमा रहेको सात्त्विक सुखलाई प्राप्त गर्दछ। त्यसपछि ऊ परमात्मासित एक भएर अक्षय सुखको अनुभूति गर्दछ॥ २१॥

**बाह्य पदार्थहरूको आसक्तिबाट कसरी बँच्ने होला?**

हे कुन्तीनन्दन! इन्द्रिय तथा विषयहरूको संयोगबाट उत्पन्न हुने जति पनि भोग(सुख) छन्, ती सबै दुःखकै कारण हुन् र आदिअन्त(आउनेजाने)वाला हुन्। यसर्थ, विवेकी मनुष्य तिनमा रमाउँदैन॥ २२॥

**ती भोगहरूमा नरमाउने मानिसको विशेषता के छ?**

जुन मानिस शरीर छुट्नुपूर्व नै कामक्रोधको वेगलाई सहन गर्न समर्थ हुन्छ, अर्थात् काम—क्रोधको वेगलाई उत्पन्न नै हुन दिँदैन, उही सुखी हो, उही योगी हो र उही नर अर्थात् बहादुर हो॥ २३॥

**यस्तो हुँदा के हुन्छ?**

काम—क्रोधको वेग उत्पन्न नहुँदा उसलाई परमात्मतत्त्वको सुख प्राप्त हुन्छ, उसको परमात्मतत्त्वमै रमण हुन्छ भने उसको ज्ञान सधैँ अलुप्त रहन्छ। यस्तो ब्रह्मस्वरूप साधकले शान्त ब्रह्मलाई प्राप्त गर्दछ॥ २४॥

**त्यस शान्त ब्रह्मलाई अरु ककसले प्राप्त गर्दछन्?**

जसका शरीर, इन्द्रिय, मन, बुद्धि वशमा छन्, जसको लगाव सम्पूर्ण प्राणीहरूको हितमा छ, जसको मनका सबै दुविधाहरू(संशय) मेटिएका छन् र जसका सबै पाप नष्ट भएका छन्, यस्ता विवेकी साधकहरूले नै निर्वाण ब्रह्मलाई प्राप्त गर्दछन्॥ २५॥

**निर्वाण ब्रह्मलाई प्राप्त गर्नेहरूको लक्षण कस्तो हुन्छ?**

ती कामक्रोधबाट सर्वथा मुक्त हुन्छन्, उनीहरूको मन वशमा हुन्छ, उनीहरूले स्वरूपको साक्षात्कार गरेका हुन्छन्, यस्ता साङ्ख्ययोगीलाई जीवित छँदै र मृत्युपछि निर्वाण ब्रह्म नै प्राप्त हुन्छ॥ २६ ॥

**यो निर्वाण ब्रह्मलाई कुनै दोस्रो उपायले पनि प्राप्त गर्न सकिन्छ त?**

सकिन्छ, ध्यानयोगले पाउन सकिन्छ। बाह्य विषयहरूलाई बाहिरै छोडेर अर्थात् सम्पूर्ण विषयलाई त्यागेर, आँखाको दृष्टिलाई भौँहरूको बीचमा केन्द्रित गरेर र नाकबाट प्रवाहित प्राण—अपान अर्थात् रेचक—पूरकलाई समान बनाएर, जसका इन्द्रिय, मन र बुद्धि आफ्नो वशमा छन्, यस्तो ती इच्छा, भय र क्रोधरहित मोक्षपरायण साधक सधैँ मुक्त नै हुन्छ॥ २७—२८ ॥

**अर्को पनि कुनै सजिलो विधि छ र, जसले गर्दा सबै सजिलो गरी मुक्त होऊन्?**

अँ, भक्तियोग छ। जसले मलाई सम्पूर्ण लोकका महान् ईश्वर, सम्पूर्ण प्राणीहरूको परमसुहृद् (स्वार्थरहित दयालु एवम् प्रेमी) एवम् सम्पूर्ण यज्ञ र तपहरूको भोक्ता जान्दछ, दृढतासाथ मान्दछ, अर्थात् आफूलाई कहिल्यै भोक्ता ठान्दैन, उसलाई परमशान्ति प्राप्त हुन्छ॥ २९ ॥

॥ श्रीपरमात्मने नमः ॥

# छैटौँ अध्याय

भगवान्‌ले भन्नुभयो—मैले कर्मयोगको निकै कुरा बताइदिएँ, अब मैले कर्मयोगको सार भन्छु। जुन मानिसले कर्मफलको अर्थात् उत्पत्ति—विनाशशील पदार्थको सहारा नलिईकन कर्तव्यकर्म गर्दछ, उही सन्न्यासी हो, उही योगी हो। केवल अग्नि क्रियाको त्याग गर्ने मानिस सन्न्यासी र योगी होइन। यसर्थ, हे अर्जुन! मानिसले जसलाई सन्न्यास (साङ्ख्ययोग) भन्दछन्, त्यसैलाई तिमीले योग (कर्मयोग) ठान॥ १ ॥

**सन्न्यासी र योगीको महिमा कुन कुराका लागि हो?**

सङ्कल्पहरूको त्यागका लागि, किनकि सङ्कल्पको त्याग नगरी अर्थात् आफ्नो मनको कुरा नछोडी मनुष्य कुनै पनि योगी हुन सक्दैन॥ २ ॥

**योगी हुने मुख्य कारण के हो?**

जो योग(समता)मा आरुढ हुन चाहन्छ, यस्तो मननशील योगीका लागि निष्कामभावले कर्तव्यकर्म गर्नु(योगारुढ हुनुमा) कारण हो र त्यही योगारुढ मनुष्यको शान्ति परमात्मातत्त्वको प्राप्तिमा कारण हो, अर्थात् संसारको त्यागबाट प्राप्त हुने शान्तिको उपभोग नगर्नु परमात्मातत्त्वको प्राप्तिमा कारण हो॥ ३ ॥

**त्यस योगारुढ मनुष्यका लक्षण केके हुन्?**

जसको न त इन्द्रियहरूको भोगमा र न कर्ममा नै आसक्ति छ तथा न आफ्नो कुनै सङ्कल्प नै छ, त्यही मनुष्य योगारुढ हो॥ ४॥

**मानिस योगारुढ हुनका लागि के गर्नुपर्दछ?**

स्वयंले आफैँ आफ्नो उद्धार गर्नुपर्दछ, आफ्नो पतन गर्नुहुँदैन, किनकि यो आफू नै आफ्नो मित्र हो, आफू नै आफ्नो शत्रु हो॥ ५॥

**आफैँ आफ्नो शत्रु र मित्र कसरी नि?**

जसले आफूले आफैँमाथि विजय प्राप्त गऱ्यो, अर्थात् जसले असत्सित सम्बन्ध मान्दैन, त्यो आफू नै आफ्नो मित्र हो र जसले आफूमाथि विजय प्राप्त गरेन अर्थात् जसले असत्सित आफ्नो सम्बन्ध मान्दछ, त्यो आफू नै आफ्नो शत्रु हो॥ ६॥

**आफू नै आफ्नो मित्र हुँदा के हुन्छ?**

जसले आफूले आफूलाई जितेको छ, ऊ प्रारब्धवश आउने अनुकूलता—प्रतिकूलतामा, वर्तमानमा गरिएका कर्मका सफलता—विफलतामा तथा अरुद्वारा गरिएका मान—अपमानमा निर्विकार रहन्छ। अतः उसलाई परमात्माको प्राप्ति हुन्छ॥ ७॥

**परमात्मालाई प्राप्त गरेको मानिसका लक्षण केके हुन्, भगवान्?**

उसको अन्तःकरण सधैँ ज्ञानविज्ञानले तृप्त रहन्छ, उसको सम्पूर्ण इन्द्रियहरूमाथि अधिकार रहन्छ, ऊ सबै परिस्थितिहरूमा निर्विकार रहन्छ, माटोको डल्लो, ढुङ्गा र सुनमा उसको बुद्धि समान रहन्छ, यस्तो योगीलाई समतायुक्त भनिन्छ। केवल पदार्थमा मात्रै होइन, सुहृद्, मित्र, शत्रु, उदासीन, मध्यस्थ, द्वेष्य,

बन्धु, साधु र पापी व्यक्तिहरूमा पनि जसको बुद्धि समान रहन्छ, यस्तो समबुद्धिवाला मानिस सर्वश्रेष्ठ हुन्छ॥ ८–९ ॥

**यो समबुद्धि केवल कर्मयोगबाट मात्रै हुन्छ कि अर्को कुनै साधनबाट पनि हुन्छ?**

त्यो समबुद्धि ध्यानयोगबाट पनि हुन्छ। यसर्थ, मैले त्यो ध्यानयोगको विधि बताउँछु। ध्यानयोगीले भोगबुद्धिबाटै सङ्ग्रहको त्याग गरेर कामनारहित भएर अन्तःकरण तथा शरीरलाई वशमा राखेर अनि एकान्तमा एक्लै बसेर आफ्नो मनलाई निरन्तर परमात्मामा लगाओस्॥ १० ॥

**मनलाई परमात्मामा लगाउनका लागि अर्थात् ध्यान गर्नका लागि उपयोगी कुरा के हुन्?**

शुद्ध पवित्र स्थानमा ध्यानयोगीले क्रमशः कुश, मृगचर्म र पवित्र कपडा ओछ्याओस्। त्यो आसन न अत्यन्त माथि होस्, न अत्यन्त तल होस्, स्थिर होस्, अर्थात् हल्लिने खालको नहोस्॥ ११ ॥

**यस्तो आसन ओछ्याएपछि के गर्ने?**

त्यस आसनमा बसेर चित्त र इन्द्रियहरूका क्रियाकलापलाई वशमा राख्दै मनलाई एकाग्र गरी अन्तःकरणको शुद्धिका लागि ध्यानयोगको अभ्यास गरोस्॥ १२ ॥

**त्यस आसनमाथि कसरी बस्नुपर्छ नि?**

शरीर, गर्धन र टाउको सीधा अचल राखेर तथा यताउता नहेरी केवल आफ्नो नासिकाको अग्रभागलाई हेर्दै स्थिर भएर बसोस्॥ १३ ॥

**यस्तो आसनमा बस्दा कुन भावले बस्नुपर्दछ?**

जसको अन्तःकरण रागद्वेष आदि द्वन्द्वहरूले मुक्त छ, जो भयरहित छ र जसले ब्रह्मचर्य व्रतको पालन गर्दछ, यस्तो सावधान योगीले मनलाई संसारबाट हटाएर ममा लगाउँदै मेरै परायण भएर बसोस्॥ १४॥

**यसको फल के हुन्छ नि?**

यसप्रकार आफ्नो मनलाई निरन्तर ममा लगाई नियन्त्रणमा राखेको योगीलाई ममा रहने निर्वाण परमा शान्तिको प्राप्ति हुन्छ॥ १५॥

**यसरी ध्यान गर्नेहरू त कति हुन्छन्, तर ती सबैको ध्यानयोग सिद्ध किन हुँदैन त भगवान्?**

हे अर्जुन! धेरै खाने र खाँदै नखाने एवम् धेरै सुत्ने र सुत्दै नसुत्नेवालालाई यो योग सिद्ध हुँदैन॥ १६॥

**त्यसोभए यो योग कसको सिद्ध हुन्छ त?**

जसको आहार (भोजन) र विहार(घुमफिर) यथोचित छ, जसको कर्ममा चेष्टा यथोचित छ र जसको सुत्ने र उठ्ने काम पनि यथोचित छ, उसैलाई दुःखको नाश गर्ने योग सिद्ध हुन्छ॥ १७॥

**दुःखको नाश गर्ने यो योग कहिले सिद्ध हुन्छ?**

जब राम्ररी वशमा गरिएको चित्त आफ्नो स्वरूपमा स्थित हुन्छ र सम्पूर्ण पदार्थहरूबाट विमुख हुन्छ, अर्थात् आफ्नालागि कुनै पनि पदार्थको अलिकति मात्र पनि आवश्यकता महसुस गर्दैन, तब ऊ योगी कहलिन्छ, अर्थात् उसको योग सिद्ध हुन्छ॥ १८॥

**योगीको त्यस चित्तको स्थिति कस्तो हुन्छ?**

जसरी स्पन्दनरहित वायुको स्थानमा राखिएको बत्तीको शिखा अलिकति पनि हल्लिँदैन, ध्यानयोगको अभ्यास गर्ने

योगीको चित्तको अवस्था पनि यस्तै हुन्छ॥ १९ ॥

**चित्तको यस्तो स्थिति भएपछि के हुन्छ?**

योगको अभ्यासले निरुद्ध भएको चित्त जब समाधिसुखबाट पनि मुक्त हुन्छ, तब योगी आफूले आफैँमा आफैँलाई देख्दै आफैँमा सन्तुष्ट हुन्छ॥ २० ॥

**आफू आफैँमा सन्तुष्ट भएपछि के हुन्छ?**

योगीलाई सीमारहित, इन्द्रियातीत र बुद्धिले ग्रहण गर्नलायक सुखको अनुभव हुन्छ। यस्तो वास्तविक सुखमा स्थित भएपछि त्यो ध्यानयोगी फेरि कहिल्यै आफ्नो स्वरूपबाट विचलित हुँदैन॥ २१ ॥

**ऊ के कारणले गर्दा विचलित हुँदैन?**

उसले जुन लाभ(सुख) प्राप्त गर्दछ, त्यसभन्दा ठूलो अर्को कुनै लाभ उसका उसले मान्दा पनि आउँदैन र त्यसमा स्थित भएपछि ऊ निकै ठूलो दुःखबाट पनि विचलित हुँदैन, किनकि ऊ जुन अवस्थामा रहेको छ, त्यहाँ सुखको कमी छैन भने दुःख त्यहाँ पुग्नै सक्दैन॥ २२ ॥

**यस्तो विलक्षण सुखलाई प्राप्त गर्नका लागि के गर्नुपर्दछ?**

जसमा दुःखको संयोगकै वियोग होस्, अर्थात् जसमा संसारका साथ सर्वथा सम्बन्ध विच्छेद छ, त्यसलाई नै 'योग' नामले बुझ्नुपर्दछ। यस्तो योगलाई जागरूक चित्तले निश्चयसाथ प्राप्त गर्नुपर्दछ॥ २३ ॥

**आफ्नो स्वरूपको ध्यानले जुन योग (साध्यरूप समता) प्राप्त हुन्छ, त्यसको प्राप्तिको अर्को पनि उपाय छ र?**

छ, निर्गुण—निराकार ध्यान हो। सङ्कल्पका कारण उत्पन्न हुने

सम्पूर्ण कामनाहरूको पूर्ण त्याग गरेर र मनमार्फत इन्द्रियसमूहलाई सबैतिरबाट हटाई धैर्यसाथ बुद्धिले बिस्तारै संसारबाट मुक्त होओस् र सबै ठाउँमा परिपूर्ण परमात्मामा मनबुद्धि स्थिर गर्दै त्यसपछि कुनै पनि चिन्तन नगरोस्॥ २४—२५॥

**यदि चिन्तन भयो भने?**

अभ्यास गर्नुपर्दछ, अर्थात् यो अस्थिर र चञ्चल मन जहाँजहाँ जान्छ, त्यहाँबाट हटाएर एक परमात्मामा नै लगाइयोस्॥ २६॥

**यसो गरेपछि के हुन्छ?**

रजोगुणी वृत्तिले रहित शान्त मन भएको पापरहित र ब्रह्मस्वरूप योगीलाई उत्तम (सात्त्विक) सुखको प्राप्ति हुन्छ॥ २७॥

**त्यसपछि के हुन्छ?**

आफूले आफूलाई सधैँ परमात्मामा लगाउँदै गरेको त्यस पापरहित योगीलाई सुखसाथ ब्रह्मस्वरूप अत्यन्त सुखको प्राप्ति हुन्छ॥ २८॥

**यहाँसम्म हजुले सगुण—साकारको, आफ्नो स्वरूपको र निर्गुण—निराकारको ध्यान गर्नेहरूको वर्णन गर्नुभयो, तर उनीहरूले संसारलाई कुन दृष्टिले हेर्छन्, यसको वर्णन गर्नुभएन। अब भगवान्! आफ्नो स्वरूपको ध्यान गर्नेले यो संसारलाई कसरी हेर्छ, त्यो बताउनुस्।**

ध्यानयोगले युक्त अन्तःकरणवाला त्यो योगीले आफूलाई (स्वरूपलाई) सम्पूर्ण प्राणीहरूमा देख्दछ र सम्पूर्ण प्राणीहरूलाई आफैँभित्र (स्वरूपमै) देख्दछ, यसर्थ ऊ समदर्शी हुन्छ॥ २९॥

**जसले तपाईंको सगुण—साकाररूपको ध्यान गर्दछ, उसले संसारलाई कसरी हेर्छ नि?**

उसले सबैमा मलाई देख्छ र सबैलाई ममा देख्दछ, यसर्थ उसका अगाडि म अदृश्य हुन्नँ भने ऊ पनि मेरा अगाडि अदृश्य हुँदैन॥ ३० ॥

**तपाईं र त्यो योगी दुवै परस्परमा किन अदृश्य हुनुहुन्न?**

ऊ सम्पूर्ण प्राणीहरूमा रहेको मसित एक भएर मेरो भजन गर्दछ, यसर्थ उसले सबैसित उचित व्यवहार गर्दागर्दै पनि निरन्तर ममा नै स्थित रहन्छ। त्यसोहुँदा हामी दुई एक अर्काका लागि अदृश्य कसरी हुन सक्छौँ त? हुँदैनौँ॥ ३१ ॥

**जसले हजुरको निर्गुण निराकार स्वरूपको ध्यान गर्दछ, उसले चाहिँ यो संसारलाई कसरी हेर्छ नि?**

जसरी अज्ञानी मनुष्यले आफ्नो शरीरका अङ्गमा तथा तिनको सुखदु:खमा आफूलाई समान देख्दछ, त्यसैगरी त्यो योगीले आफ्नो शरीरको उपमाले सम्पूर्ण प्राणीहरूमा तथा तिनका सुखदु:खमा आफूलाई समान देख्दछ। यसर्थ, त्यो योगी सर्वश्रेष्ठ मानिएको छ॥ ३२ ॥

**अर्जुनले भने—अहिलेसम्म हजुरले समताप्राप्तिका लागि जुन ध्यानयोगको वर्णन गर्नुभयो, हे मधुसुदन! मनको चञ्चलताका कारण त्यस ध्यानयोगमा स्थिर रहन मैले अति कठिन देखेको छु, किनकि हे कृष्ण! मन सारै नै चञ्चल, प्रमथनशील, बलवान् र जिद्दी छ। त्यसलाई निग्रह गर्नु भनेको वायुलाई निग्रह गर्नु बराबर कठिन छ भन्ने म ठान्दछु॥ ३३-३४॥**

भगवान्ले भन्नुभयो—तिमीले भनेको एकदम ठीक हो। महाबाहो, वास्तवमा यो मन निकै चञ्चल छ र यसलाई निग्रह गर्न निकै गाह्रो छ। तर, हे कुन्तीनन्दन ! अभ्यास र वैराग्यले यसको

नियन्त्रण गर्न सकिन्छ। यसर्थ, जसको मन र इन्द्रियहरू वशमा छैनन्, उसलाई ध्यानयोगको सिद्धि हुन गाह्रो छ, तर जसको मन र इन्द्रियहरू वशमा छन्, उसले ध्यानयोग सिद्ध गर्न सक्छ भन्ने मेरो मत रहेको छ॥ ३५–३६ ॥

**अर्जुनले भने—हे कृष्ण! जसको साधनामा श्रद्धा छ, तर प्रयास कमजोर छ, त्यस्तो साधकको अन्तकालमा साधनामा स्थित भएन भने उसले योगसिद्धि प्राप्त नगरी कुन गतिमा जान्छ? संसारको आश्रयरहित र परमात्माप्राप्तिको मार्गबाट विचलित उभयभ्रष्ट साधक छिन्नभिन्न बालदजस्तै नष्ट त हुँदैनन्? यो मेरो सन्देह हो, किनकि मेरो यो सन्देहलाई अरुले होइन, केवल हजुरले नै हटाइदिन सक्नुहुन्छ॥ ३७—३९ ॥**

भगवान्‌ले भन्नुभयो— पार्थ! उसको न त यस लोक र परलोक कतै पनि पतन हुँदैन, किनकि हे प्रिय! कल्याणकारी काम गर्ने कुनै पनि साधक दुर्गतिमा पर्दैन॥ ४० ॥

**यदि ऊ दुर्गतिमा पर्दैन भने कहाँ जान्छ त?**

जुन साधकमा सांसारिक सुखको केही इच्छा रहेको छ, यस्तो योगभ्रष्ट साधक पुण्यकर्म गर्नेहरूको लोक(स्वर्ग आदि उच्चलोकमा)मा जान्छ र त्यहाँ धेरै वर्षसम्म बसेर मृत्युलोकमै पवित्र मान्छेको घरमा जन्मन्छ। तर, जुन साधकभित्र सांसारिक सुखको इच्छा हुँदैन, तर अन्तिम समयमा कुनै विशेष कारणले योगभ्रष्ट हुन्छ, ऊ स्वर्ग आदि लोकमा नगएर सीधै तत्त्वज्ञ योगीहरूको कुलमा जन्मन्छ। यसप्रकारको जन्म यस लोकमा अत्यन्त दुर्लभ छ॥ ४१–४२ ॥

**तत्त्वज्ञ योगीहरूको कुलमा जन्म लिँदा के हुन्छ र?**

हे कुरुनन्दन! त्यहाँ उसलाई पूर्वजन्मकृत साधन, सामग्री स्वतः प्राप्त हुन्छन्। तिनका बलमा उसले साधनाको सिद्धिका लागि पुनः तत्परतासाथ प्रयत्न गर्दछ॥ ४३ ॥

**हजुरले तत्त्वज्ञ योगीहरूको कुलमा जन्म लिनेहरूको कुरा त बताउनुभयो, अब पवित्र व्यक्तिको घरमा जन्म लिनेहरूको के हुन्छ? त्यो बताइदिनुस्।**

त्यो योगभ्रष्ट भोगहरूको वशमा भएर पनि पूर्वजन्ममा गरिएका अभ्यास(साधना)का कारण परमात्मातिर आकर्षित हुन्छ।

**पूर्वाभ्यासमा यस्तो कुन चाहिँ शक्ति छ, जसले गर्दा ऊ साधनामा जबर्जस्ती तानिन्छ?**

बाबु! यदि योगको जिज्ञासुले पनि वेदहरूमा भनिएका सकाम कर्मलाई अतिक्रमण गर्दछ भने जो योगभ्रष्ट छ, योगमा लागेको छ, उसको बारेमा के नै भन्नु छ र!॥ ४४ ॥

**परमात्मातिर खिचिँदा के हुन्छ नि?**

ऊ तीव्रतासाथ साधनामा लाग्दछ भने सम्पूर्ण पापहरूबाट मुक्त भएर अनेक जन्ममा सिद्ध भएको (साधक) परमगतिलाई प्राप्त गर्दछ॥ ४५ ॥

**जुन योगीले परमगति प्राप्त गर्दछ, उसको विशेषता के छ?**

त्यो योगी सकामभाव भएका तपस्वी, ज्ञानी र कर्मीहरूभन्दा पनि श्रेष्ठ हुन्छ भन्ने मेरो विचार हो। यसर्थ, हे अर्जुन! तिमी पनि योगी बन॥ ४६ ॥

**योगीहरूमा पनि श्रेष्ठ कुन हो?**

जो ममा तल्लीन भएर अन्तःकरणदेखि नै श्रद्धासाथ मेरो भजन गर्दछ, त्यस्तो मेरो भक्त सम्पूर्ण योगीहरूमा श्रेष्ठ हुन्छ॥ ४७ ॥

॥ श्रीपरमात्मने नमः ॥

# सातौँ अध्याय

**जसलाई हजुरले सर्वश्रेष्ठ योगी ठान्नुहुन्छ, के म पनि त्यस्तै बन्न सक्छु त?**

एकदम, बन्न सक्छौ नि।

**कसरी नि?**

भगवान्‌ले भन्नुभयो—हे पार्थ! ममा नै आसक्त मन बनाई मेरै आश्रय लिएर मेरो भजन गर्दै निःसन्देह तिमीले मेरा समग्ररूपलाई जान्न सक्छौ। जसरी तिमीले मेरो समग्ररूपलाई जान्दछौ, त्यो सुन। त्यो समग्ररूपलाई जान्नका लागि मैले तिमीलाई विज्ञानसहितको ज्ञान सबै बताउँछु, जसलाई जानेपछि तिमीसित यस मनुष्यलोकमा जान्न केही बाँकी रहने छैन॥ १-२॥

**यदि कुरा त्यस्तो हो भने सबै मानिसले हजुरको समग्ररूपलाई किन जान्न सक्दैनन् त?**

यहाँ स्वतःप्रवृत्ति निकै थोरै मानिसमा छ। हजारौँमा कुनै एउटा मान्छेले आफ्नो कल्याणका लागि प्रयास गर्दछ। त्यसरी प्रयास गर्ने सिद्ध (मुक्त पुरुष) हरूमध्ये पनि कुनै एक जनाले नै मेरो समग्ररूपलाई तत्त्वतः बुझ्न सक्दछ॥ ३॥

**हजुरको त्यो समग्ररूप के हो नि?**

हे महाबाहो! पृथ्वी, जल, तेज, वायु, आकाश, मन, बुद्धि र अहङ्कार गरी आठ प्रकारको मेरो 'अपरा'(जड) प्रकृति छ। योभन्दा पूरै भिन्न मेरो जीवरूपा 'परा'(चेतन) प्रकृति छ, जसले (अहंता—ममता गरी) यस संसारलाई धारण गरेको छ। यी परा

र अपरा दुवै प्रकृतिको संयोगले नै सम्पूर्ण प्राणी उत्पन्न हुन्छन्।

**यिनको पनि मूल कारण के हो भगवन्?**

म नै सम्पूर्ण संसारको मूल हुँ, किनभने संसार मबाटै उत्पन्न हुन्छ र ममै लीन हुन्छ। हे धनञ्जय! मबाहेक यस संसारको अर्को कुनै कारण छैन। जसरी धागोको सुताले बनाइएका मणिहरू यदि सुताकै धागोमा उनिन्छन् भने त्यो मालामा सबैतिर सुता नै सुता हुन्छ, त्यसैगरी सम्पूर्ण संसारमा म नै म हुन्छु॥ ४—७॥

**तर मैले यो कुरालाई कसरी बुझूँ भगवान्?**

हे कुन्तीनन्दन! पानीमा रस म नै हुँ, सूर्य र चन्द्रमामा प्रभा (प्रकाश) म नै हुँ, सम्पूर्ण वेदहरूमा प्रणव (ओंकार) मै हुँ, आकाशमा शब्द मै हुँ, मनुष्यमा पुरुषार्थ मै हुँ, पृथ्वीमा पवित्र गन्ध मै हुँ, अग्निमा तेज मै हुँ, सम्पूर्ण प्राणीहरूमा जीवनीशक्ति मै हुँ र तपस्वीहरूको तपस्या पनि म नै हुँ। हे पार्थ! सम्पूर्ण प्राणीहरूको अनादि बीज मलाई नै मान। बुद्धिमान्‌हरूको बुद्धि र तेजस्वी पुरुषहरूको तेज (प्रभाव) मै हुँ। हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन! बलवान्‌हरूमा कामना र आसक्तिहरूले रहित (सात्त्विक) बल म नै हुँ। मनुष्यहरूमा धर्मले युक्त काम म नै हुँ। अरु के भनूँ, जति पनि सात्त्विक, राजस र तामस भाव छन्, ती सबै मबाट नै हुन्छन् भन्ने ठान, तर म तिनमा र ती ममा हुँदैनन्, अर्थात् म उनीहरूदेखि नितान्त अतीत र निर्लिप्त छु॥ ८—१२॥

**यदि यसो हो भने सबैले हजुलाई यसरी नै किन बुझ्दैनन् त?**

ती सत्त्व, रज र तम, यी तीनै गुणले मोहित हुन्छन्, अर्थात् संसारमै भिजिरहन्छन्। यसर्थ, तिनले मलाई यी तीनै गुणहरूदेखि अतीत र अविनाशी ठान्दैनन्॥ १३॥

**त्यसोभए हजुरलाई कसले बुझ्दछ त?**

मेरो यो तीनै गुणले युक्त मायालाई पार गर्न सारै अप्ठ्यारो छ। जो यो मायाबाट विमुख भएर केवल मेरो मात्रै शरण पर्दछन्, उनीहरू नै मेरो कृपावश यो मायाबाट पार हुन सक्दछन्, अर्थात् मलाई बुझ्न सक्दछन्॥ १४॥

**यदि यसो हो भने सबै हजुरका शरणमा किन आउँदैनन्?**

जो आसुर भावको सहारा लिनेहरू छन् र मायाले जसको ज्ञान (विवेक) ढाकिएको छ, यस्ता मानिसहरूमध्ये अति नीच तथा पापकर्म गर्ने मूढ मनुष्य मेरो शरणमा आउँदैनन्॥ १५॥

**हजुरका शरणमा को आउँछन् त उसोभए?**

हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन! अर्थार्थी, आर्त, जिज्ञासु र ज्ञानी(प्रेमी)—यी चार प्रकारका सुकृती भक्तले मेरो भजन गर्दछन्, अर्थात् मेरो शरणमा आउँछन्॥ १६॥

**यी चारमध्ये श्रेष्ठ कुन हो?**

यी चार भक्तमध्ये अनन्य भक्तिवाला ज्ञानी(प्रेमी) भक्त श्रेष्ठ हुन्छ, किनकि ऊ निरन्तर ममा नै लागिरहन्छ। यसर्थ, म उसका लागि र ऊ मेरालागि अत्यन्त प्रिय छ॥ १७॥

**के दोस्रो भक्त श्रेष्ठ हुँदैन?**

ती सबै उदार हुन्छन्, श्रेष्ठ हुन्छन्।

**उसोभए प्रेमी भक्तमा के नै विशेषता रह्यो त?**

प्रेमी भक्त त मेरै आत्मा(स्वरूप) हो भन्ने मेरो मत हो, किनकि जुनभन्दा श्रेष्ठ अर्को कुनै गति छैन, यस्तो ममा ऊ लागेको छ र ममा नै दृढआस्था भएको छ। अर्थात्, अर्थार्थीमा धनको इच्छा पनि हुन्छ, आर्तमा दुःख हटाउने इच्छा पनि हुन्छ, तर ज्ञानी(प्रेमी)मा त कुनै पनि किसिमको इच्छा हुँदैन॥ १८॥

**ज्ञानी अर्थात् प्रेमी भक्तको यस्तो महिमा किन नि?**

धेरै जन्महरूमध्येको यो अन्तिम मनुष्य जन्ममा मेरो शरण परेर 'सबैथोक वासुदेव (परमात्मा) नै हो।' भन्ने ज्ञान भएको महात्मा संसारमा अत्यन्त दुर्लभ छ॥ १९ ॥

**यस्ता प्रेमी भक्त नहुनुको कारण चाहिँ के होला?**

किसिम—किसिमका कामनाका कारण जसको 'सबैथोक वासुदेव नै हो' भन्ने ज्ञान ढाकिएको छ, यस्ता आफ्नो स्वभावको वशमा भएका मानिसले मेरो शरण नलिएर कामनापूर्तिका अनेक उपाय र नियमलाई बोकेर अन्य देवताको शरणमा पर्दछन् अर्थात् ती देवताको उपासनामा लाग्दछन्॥ २० ॥

**तिनलाई हजुरले आफूतिर किन तान्नुहुन्न त?**

मैले मानिसलाई प्रदान गरेको स्वतन्त्रता हनन गर्दिनँ नि, बरु जुन मानिसले श्रद्धासाथ जुनजुन देवताको पूजा गर्न चाहन्छ, ती—ती देवताप्रतिको उसको श्रद्धालाई सुदृढ तुल्याइदिन्छु र ऊ त्यही श्रद्धाले युक्त भएर सकामभावले ती देवताको उपासना गर्दछ। तर, बाबु ! विचित्र के छ भने तिनलाई ती उपासनाबाट जुन फल प्राप्त हुन्छ, त्यो मैले व्यवस्था गरेअनुरूप नै हुन्छ, तर सकामभावसाथ देवताहरूको उपासना गरेको हुनाले ती अल्पबुद्धि भएका मनुष्यलाई विनाशील अर्थात् उत्पन्न र नष्ट हुने खालको फल मात्रै प्राप्त हुन्छ, म प्राप्त हुन्नँ। देवताहरूको पूजा गर्नेहरू धेरैभन्दा धेरै भनेको देवताहरूको पुनरावर्ती लोकमा मात्रै जान सक्दछन्, तर मेरो भक्तले भने मलाई नै प्राप्त गर्दछ॥ २१—२३ ॥

**यदि हजुरका भक्तले हजुरलाई नै प्राप्त गर्दछन् भने सबै तपाईंकै भक्त किन हुन सक्दैनन् त?**

बाबु! बुद्धिहीन मानिस मेरो सर्वश्रेष्ठ अविनाशी परमभावलाई नजानी म अव्यक्त परमात्मालाई पनि जन्मने र मर्ने ठान्दछन्,

अनि ती मेरा भक्त कसरी बन्न सक्छन् र?॥ २४॥

**ठीक छ, उनीहरूले हजुरको परमभावलाई जानेनन्, तर हजुर आफैँ उनीहरूको अगाडि वास्तविकरूपमा प्रकट हुन किन सक्नुहुन्न त?**

त्यस्तो होइन नि! यदि ती मूढ मानिसले मलाई अजन्मा र अविनाशी मान्दैनन्, तब योगमायाले राम्रोसित आवृत भएर म उनीहरूका सामुमा वास्तविकरूपमा प्रकट हुन्नँ॥ २५॥

**के त्यो योगमायाको आवरण हजुरको अगाडि हुँदैन?**

रहँदैन अर्जुन, म त भूत, भविष्य र वर्तमानमा रहने प्राणीहरूलाई जान्दछु, तर ती मायाले मोहित जीवले मलाई जान्दैनन्॥ २६॥

**हजुरलाई नजान्नुको मुख्य कारण चाहिँ के होला?**

हे भरतवंशी अर्जुन! मलाई नबुझ्नुको मुख्य कारण राग र द्वेषले उत्पन्न हुने द्वन्द्वमोह हो। हे परंतप! यही द्वन्द्वले मोहित सम्पूर्ण प्राणीले संसारमा जन्म र मरणलाई प्राप्त गर्दछन्॥ २७॥

**त्यसोभए के सबै द्वन्द्वमोहले मोहित हुन्छन्?**

हुँदैनन्, जुन पुण्यकर्मा मानिसका पाप नष्ट भएका छन्, ती द्वन्द्वमोहले रहित हुन्छन् र दृढव्रती भएर मेरो भजनमा लाग्दछन्॥ २८॥

**दृढव्रती भएर हजुरको भजनमा लाग्दा के हुन्छ र?**

जसले जरामरण आदि दुःखहरूबाट मुक्ति पाउनका लागि केवल मेरै आश्रय लिएर प्रयास गर्दछन्, उनीहरूले त्यस ब्रह्मलाई, सम्पूर्ण अध्यात्मलाई र सम्पूर्ण कर्मलाई एवम् ती अधीभूत, अधिदैव र अधियज्ञसहित मलाई अर्थात् मेरो समग्ररूपलाई ('सबैथोक वासुदेव नै हो' भन्ने रूप) जान्दछन्। त्यति मात्रै होइन, ती अनन्य भक्तले अन्तकालमा मलाई नै प्राप्त गर्दछन्॥ २९—३०॥

॥ श्रीपरमात्मने नमः ॥

# आठौँ अध्याय

**अर्जुनले भने—हे पुरुषोत्तम! भर्खरै हजुरले आफ्ना आश्रितहरूद्वारा आफ्नो ब्रह्म, अध्यात्म आदि समग्ररूपलाई जान्ने कुरा बताउनुभयो, अतः म त्यो ब्रह्म के हो भनेर सोध्न चाहन्छु।**

भगवान्ले भन्नुभयो—त्यस परम अक्षर अर्थात् निर्गुण—निराकार परमात्मालाई ब्रह्म भनिन्छ।

**त्यो अध्यात्म भनेको के हो नि?**

जीवहरूको सत्ता (हुनेपन) लाई अध्यात्म भनिन्छ।

**त्यो कर्म के हो?**

महाप्रलयमा आफ्नो कर्मसहित ममा लीन भएका जीवहरूलाई महासर्गको सुरुआतमा कर्मफल भोगका लागि आफूबाट अप्रकट गरिदिनु अर्थात् शरीरहरूका साथमा विशेष सम्बन्ध गरिदिनु नै त्यागरूप कर्म हो।

**अधिभूत कसलाई भनिएको हो, भगवान्?**

हे देहधारीहरूमा श्रेष्ठ अर्जुन! नष्ट भएर जाने पदार्थ मात्रलाई अधिभूत भनिन्छ।

**अधिदैव कसलाई भनिन्छ?**

सृष्टिको सुरुआतमा सबैभन्दा पहिले प्रकट हुने हिरण्यगर्भ ब्रह्माजी अधिदैव हुनुहुन्छ।

**यो देहमा अधियज्ञ कुन हो?**

यस मनुष्य शरीरमा अन्तर्यामीरूपमा म नै अधीयज्ञ हुँ।

**हे मधुसूदन! वशमा गरिएको अन्तःकरण भएका मनुष्यहरूले**

**अन्तःकालमा हजुलाई कसरी जान्दछन्?**

हे अर्जुन! मैले पहिला अन्तकालको विषयमा आफ्नो नियम सुनाउँछु। जुन मानिसले अन्तकालमा मलाई सम्झँदै शरीर छोडिदिन्छ, उसले मलाई नै प्राप्त गर्दछ, यसमा कुनै शङ्का छैन॥ १—५॥

**अन्तकालमा हजुरको स्मरण गर्दा हजुरको प्राप्ति हुन्छ, तर यदि हजुरको स्मरण गरिएन भने नि?**

हे कुन्तीनन्दन! मानिसले मर्ने बेलामा जेजस्ता भावको स्मरण गर्दै शरीर छोड्छ, उसले त्यस्तै (मर्नेबेलाकै जस्तो) भावले भावित हुँदै त्यस्तै भावलाई प्राप्त गर्दछ॥ ६॥

**त्यसोभए मर्नेबेलामा हजुरलाई सम्झनको लागि के गर्नुपर्दछ?**

तिमीले आफ्नो मन र बुद्धिलाई ममा अर्पण गरेर सबै समय मेरै स्मरण गर र गर्नुपर्ने कर्तव्य पनि पूरा गर।

**यसबाट के हुन्छ?**

तिमीले निःसन्देह मलाई प्राप्त गर्ने छौ॥ ७॥

**हजुरको कुन स्वरूपको चिन्तन गर्नाले नियतात्मा मनुष्यले हजुलाई कसरी प्राप्त गर्दछ, भगवन्?**

मेरा सगुण—निराकार, निर्गुण—निराकार र सगुण—साकार गरी तीन स्वरूप छन्। यिनीहरूमध्ये पहिला मैले सगुण—निराकारको चिन्तनबाट मेरो प्राप्ति बताउँछु। हे पार्थ! जुन मानिसले अभ्यासयोगले युक्त अनन्य चित्तबाट परम दिव्य पुरुषको अर्थात् मेरो सगुण—निराकार स्वरूपको चिन्तन गर्दै शरीर छोड्छ, उसले मेरो त्यही स्वरूपलाई प्राप्त गर्दछ॥ ८॥

**त्यो स्वरूप कस्तो छ, भगवान्?**

त्यो सर्वज्ञ छ, सबैको आदि हो र सबैमाथि शासन गर्नेवाला हो, सूक्ष्मातिसूक्ष्म छ, सबैलाई धारण—पोषण गर्नेवाला हो, अचिन्त्य छ र अज्ञान—अन्धकारले रहित तथा सूर्यसमान प्रकाशस्वरूप छ। यस्तो स्वरूपको चिन्तन जसले गर्दछ, त्यस्तो भक्तियुक्त मानिसले मर्नेबेलामा योगबलद्वारा अचल मनले आफ्नो प्राणलाई भृकुटीको बीचमा राम्रोसित स्थापित गरेर शरीर छोडेपछि त्यस परमदिव्य पुरुषलाई प्राप्त गर्दछ॥ ९—१०॥

**मैले हजुरको सगुण—निराकार स्वरूपको चिन्तनबाट हजुरको प्राप्ति हुने कुरा सुनें। अब, निर्गुण—निराकारको चिन्तनले नियतात्मा मनुष्यले हजुरलाई कसरी प्राप्त गर्दछ? त्यो कुरा बताउनुहोस्।**

वेदवेत्ताहरूले जसलाई अक्षर भन्दछन्, रागरहित ऋषिहरूले जसलाई प्राप्त गर्दछन् र जसलाई पाउने इच्छाले ब्रह्मचारीहरूले ब्रह्मचर्यको पालन गर्दछन्, त्यस पदको प्राप्तिको कुरा सङ्क्षेपमा बताउँछु। जुन साधकले अन्तकालमा सम्पूर्ण इन्द्रियलाई वशमा गरेर मनलाई हृदयमा स्थापित गरेर र प्राणलाई मस्तिष्कमा धारण गरेर योगधारणामा स्थित हुँदै 'ॐ' यही एक अक्षर ब्रह्मको उच्चारण एवम् मेरो निर्गुण—निराकार स्वरूपको चिन्तन गर्दै शरीर छोड्छ, उसले परमगतिलाई प्राप्त गर्दछ॥ ११—१३॥

**निर्गुण—निराकारको चिन्तनबाट हजुरलाई प्राप्त गर्न सकिन्छ भन्ने कुरा मैले सुनें, अब सगुण—साकारको चिन्तनबाट नियतात्मा मानिसले हजुलाई कसरी प्राप्त गर्दछ? त्यो बनाउनुहोस्।**

हे पार्थ! अनन्यचित्त भएको जुन मानिसले मेरो नित्यनिन्तर चिन्तन गर्दछ, ममा सधैँ लागिरहेको त्यस योगीका लागि म सुलभ छु, अर्थात् उसलाई म सजिलै प्राप्त हुन्छु॥ १४॥

**हजुरलाई पाएर के हुन्छ र भगवान्?**

जुन महात्माहरूले मलाई पाउँछन्, उनीहरूले हरसमय मेटिएर जाने दुःखको घररूपी पुनर्जन्मलाई प्राप्त गर्दैनन्॥ १५॥

**त्यसोभए पुनर्जन्म कसको हुन्छ त?**

हे अर्जुन! ब्रह्मलोकसम्मका सबै लोक पुनरावर्ती छन्, यसर्थ ती लोकमा गएपछि फर्किएर आउनै पर्दछ, अर्थात् फेरि जन्मिनै पर्दछ। तर, हे कौन्तेय! मलाई पाएपछि फेरि जन्म लिनुपर्दैन॥ १६॥

**ती लोक पुनरावर्ती कसरी छन्?**

समयको अवधि भएका हुनाले।

**त्यो कालको अवधि भनेको के हो?**

दिनरातको तत्त्वलाई जान्नेहरूले एक हजार चतुर्युगी* बितेपछि ब्रह्माको एक दिन हुन्छ भने एक हजारै चतुर्युग बितेपछि ब्रह्माको एक रात हुन्छ भन्ने कुरा जान्दछन्। ब्रह्माको दिनको आरम्भमा (निद्राबाट ब्रह्माजी जागेपछि) ब्रह्माजीको सूक्ष्म शरीरबाट सम्पूर्ण प्राणी प्रकट हुन्छन् भने ब्रह्माजीको रातको आरम्भकालमा (ब्रह्माजी सुतेपछि) ब्रह्माजीको सूक्ष्मशरीरमा सम्पूर्ण प्राणी लीन हुन्छन्॥ १७—१८॥

**ती प्राणी बारम्बार जन्मने र मर्ने किन गर्दछन्, भगवान्?**

प्राणीहरूको समुदाय त त्यही रहन्छ, जुन पहिलो सर्गमा थियो, तर केवल आफ्ना रागद्वेषयुक्त स्वभावको वशमा हुँदा त्यही प्राणीसमुदाय बारम्बार ब्रह्माको दिनको समयमा उत्पन्न भइरहन्छ र ब्रह्माको रातको समयमा लीन भइरहन्छ॥ १९॥

---

* त्रिचालीस लाख बीस हजार वर्षहरूको एक चतुर्युगी हुन्छ।

**त्यस अव्यक्त ( ब्रह्माको सूक्ष्मशरीर ) भन्दा पनि श्रेष्ठ अन्य केही छ, जसको कहिल्यै विनाश हुँदैन?**

छ, त्यस ब्रह्माभन्दा पनि पर(श्रेष्ठ) एक नित्य—निरन्तर रहने भावरूप अव्यक्त परमात्मा छ, जो सम्पूर्ण प्राणीहरू नष्ट हुँदा पनि नष्ट हुँदैन। त्यसैलाई अव्यक्त, अक्षर र परमगति भनिन्छ भने जसलाई पाएपछि जीव फेरि फर्किएर संसारमा आउँदैनन्, त्यही मेरो परमधाम(स्वरूप) हो॥ २०-२१॥

**त्यस परमधामको प्राप्ति कसरी हुन्छ?**

हे पार्थ! जसअन्तर्गत सबै संसार छ र जसबाट सबै संसार व्याप्त छ, त्यो परमपुरुष परमात्मा अनन्यभक्तिले प्राप्त हुन्छ॥ २२॥

**अन्य ( संसार ) सित सम्बन्ध राख्नाले या नराख्नाले के हुन्छ?**

हे अर्जुन! अन्यसित सम्बन्ध नराख्ने प्राणी जुन बाटो भएर गए, फेरि फर्किएर संसारमा आउँदैनन् भने जुन बाटोबाट गएका अन्यसित सम्बन्ध राख्ने प्राणी छन्, ती फेरि फर्किएर संसारमै आउँछन्, ती दुवै मार्गबारे मैले बताउँछु॥ २३॥

**यी दुई मार्ग केके हुन्, प्रभो?**

जुन बाटोमा प्रकाशस्वरूप अग्नि, दिन, शुक्लपक्ष र ६ महिनावाला उत्तरायणका अधिपति देवता छन्, शरीर छोडेर त्यो बाटो हुँदै गएका ब्रह्मवेत्ताहरूले ब्रह्मलाई प्राप्त गर्दछन्, अर्थात् फेरि फर्किएर आउँदैनन् भने जुन बाटोमा धूम, रात्रि, कृष्णपक्ष र छ महिना भएका दक्षिणायनका अधिपति देवता छन्, शरीर छोडेपछि त्यस बाटो हुँदै गएका सकाम मनुष्य स्वर्गादि उच्च लोकहरूको सुख भोगेर फेरि फर्किएर आउँछन्॥२४-२५॥

**ती दुई मार्ग कहिलेदेखि सुरु भएका हुन्?**

प्राणीहरूका यी दुवै शुक्ल र कृष्णमार्ग अनादि हुन्। यीमध्ये शुक्लमार्ग भएर गएकाहरू फर्किएर आउनुपर्दैन भने कृष्णमार्ग भएर गएका जति फर्किएर आउनुपर्दछ॥ २६॥

**फर्किएर आउन नपरोस् भन्नका लागि के गर्नै होला भगवान्?**

हे पार्थ! यी दुवै मार्गको परिणाम थाहा पाएपछि कुनै पनि योगी संसारसित मोहित हुँदैन। यसर्थ, हे अर्जुन! तिमी सबै समयमा योगयुक्त होऊ, अर्थात् संसादेखि सदैव निर्लिप्त(अनासक्त), निर्विकार बन॥ २७॥

**योगी भएपछि के फाइदा हुन्छ र भगवान्?**

वेदमा, यज्ञमा र दानमा जेजस्ता पुण्यफल बताइएका छन्, योगीले ती सबै पुण्यफललाई अतिक्रमण गर्दै आदिस्थान परमात्मालाई प्राप्त गर्दछ॥ २८॥



॥ श्रीपरमात्मने नमः ॥

# नवौँ अध्याय

**मैले बीचमै प्रश्न गरेपछि हजुरले जे बताउनुभयो, ती त मैले सुनेँ। मैले प्रश्न गर्नुअघि हजुरले के भन्न खोजिरहनुभएको थियो भगवन्?**

भगवान्‌ले भन्नुभयो—बाबु! मैले यसअघि विज्ञानसहितको ज्ञानको कुरा गरेको थिएँ। त्यही अत्यन्त गोपनीय विज्ञानसहितको ज्ञान दोषदृष्टिमुक्त तिमीलाई फेरि भन्छु, जसलाई जानेपछि तिमी जन्ममरणरूपी संसारबाट मुक्त हुने छौ॥ १ ॥

**त्यो विज्ञानसहितको ज्ञान त निकै अप्ठ्यारो होला, हगि?**

छैन, त्यो विज्ञानसहितको ज्ञान सम्पूर्ण विद्याहरूको पनि राजा, सम्पूर्ण गोपनीयहरूमध्ये पनि राजा, अति पवित्र, अति उत्तम, प्रत्यक्ष फलदिने, धर्ममय र अविनाशी छ भने गर्नका लागि(काममा ल्याउन) निकै सुगम छ॥ २ ॥

**यस्त सुगम विद्यालाई पनि सबैले किन प्राप्त गर्दैनन् त?**

हे परंतप! मानिसले यो ज्ञानमाथि श्रद्धा र विश्वास गर्दैनन्, यसर्थ तिनले मलाई प्राप्त नगरी मृत्यरूपी संसारको बाटोमा फर्किइरहन्छन् र बारम्बार जन्मने र मर्ने गरिरहन्छन्॥ ३ ॥

**त्यो ज्ञान—विज्ञानरूपी धर्म (विद्या) के हो त भगवान्?**

म अव्यक्तरूपले सम्पूर्ण प्राणीहरूमा छु भने सम्पूर्ण प्राणी ममा छन्। त्यस्तै, म सम्पूर्ण प्राणीमा छैन भने सम्पूर्ण प्राणी पनि ममा छैनन्, अर्थात् जहाँ प्राणीहरूको स्वतन्त्र सत्ता स्वीकारिन्छ, त्यहाँ म प्राणीहरूमा हुन्न भने प्राणीहरू पनि ममा हुँदैनन्, तर सबैथोक म नै म हुँ।

**तर यो संसारको उत्पादक र आधार त कोही अवश्य होला नि?**

अँ, छन त म छु, तर मेरो स्वरूप सम्पूर्ण प्राणीहरूलाई उत्पन्न

गर्ने, सबैलाई धारण गर्ने र तिनको भरणपोषण गर्ने खालको हुँदाहुँदै पनि ती प्राणीहरूमा स्थित छैन, उनीहरूदेखि नितान्त निर्लिप्त छ भन्ने ईश्वरसम्बन्धी मेरो यो योग(सामर्थ्य)लाई बुझ॥ ४—५॥

**त्यसोभए ती प्राणी हजुरमा कसरी स्थित छन् त?**

जसरी सबैतिर विचरण गर्ने हावा निरन्तर आकाशमै स्थित रहन्छ, त्यसैगरी सबै प्राणी ममा नै स्थित रहन्छन् भन्ने ठान॥ ६॥

**त्यसो हो भने त ती प्राणी मुक्त हुन्छन्, होला?**

हुँदैनन कुन्तीनन्दन, प्रकृतिका साथमा सम्बन्ध राख्ने ती प्राणी महाप्रलयमा मेरो प्रकृतिमा लीन हुन्छन् र महासर्गको सुरुआतमा मैले फेरि तिनको रचना गर्दछु॥ ७॥

**हजुरले तिनको रचना कहिलेसम्म गरिरहनुहुन्छ?**

जहिलेसम्म ती प्रकृति (स्वभाव) को वशमा रहन्छन्, त्यतिन्जेलसम्म मैले आफ्नो प्रकृतिलाई वशमा राखेर बारम्बार रचना गरिरहन्छु॥ ८॥

**यदि तपाईंले तिनको रचना बारम्बार गरिरहनुहुन्छ भने तपाईंको उनीहरूको रचनारूपी कर्मसित सम्बन्ध त रहन्छ होला नि भगवान्?**

रहँदैन धनञ्जय, म ती कर्मबाट आसक्तिरहित एवम् उदासीनजस्तै भई निर्लिप्त रहन्छु, यसर्थ ती कर्मले मलाई बाँध्दैनन्॥ ९॥

**त्यसोभए हजुरले सृष्टिको रचना कसरी गर्नुहुन्छ त?**

वास्तवमा प्रकृतिले नै मेरो अध्यक्षतामा अर्थात् मबाटै सत्तास्फूर्ति प्राप्त गरेर सम्पूर्ण चरअचर प्राणीहरूको रचना गर्दछ। हे कौन्तेय! मेरो अध्यक्षताका कारणले नै संसारमा अनेक परिवर्तन भइरहेको छ॥ १०॥

**हजुरको शक्तिले नै संसारमा सबैथोक भइरहेको छ तापनि सबैले तपाईंमाथि श्रद्धा किन गर्दैनन्?**

मूढहरूले मेरो सम्पूर्ण प्राणीहरूको महान् ईश्वररूप परमभावलाई नबुझ्नाले मलाई साधारण मानिस मानेर मेरो अवज्ञा गर्दछन्॥ ११ ॥

**ती मूढहरू कस्ता हुन्छन् भगवान्?**

ती मूढहरू आसुरी, राक्षसी र मोहिनी प्रकृतिको आश्रय लिने किसिमका हुन्छन्। तिनका सबै आशा, सबै शुभकर्म एवम् सबै ज्ञान व्यर्थ हुन्छन्, अर्थात् सत्फल दिनेखाले हुँदैनन्॥ १२ ॥

**त्योभए हजुरमाथि श्रद्धा गर्ने को हुन्छन् त, भगवान्?**

हे पृथानन्दन! जुन महात्माहरूले मलाई सम्पूर्ण प्राणीहरूका आदि र अविनाशी मान्दछन्, तिनले मेरो दैवी सम्पत्तिको आश्रय लिएर अनन्यभावले मेरै भजन गर्दछन्॥ १३ ॥

**हजुरको भजन गर्नेहरूका लक्षण कस्ता हुन्छन्?**

निरन्तर ममा लागिरहेका ती दृढव्रती मानिसले सभक्ति मेरो नामको कीर्तन गर्दछन्, मेरो प्राप्तिका लागि यत्न(लगनपूर्वक साधन) गर्दछन् र मलाई नमस्कार गर्दै मेरो उपासना गर्दछन्॥ १४॥

**हजुरको उपासना गर्नेहरूको अरु पनि कुनै प्रकार छ भगवान्?**

छ नि। कति साधकले ज्ञानयज्ञद्वारा अभिन्न भावले मेरो पूजा गर्दै मेरै उपासना गर्दछन् भने अन्य कति साधकले आफूलाई पृथक् मानेर एवम् विश्वलाई नै मेरो स्वरूप ठानेर (सेव्य—सेवकभावले) अनेक प्रकारले मेरो उपासना गर्दछन्॥ १५ ॥

**विश्वको उपासना तपाईंको उपासना कसरी भयो त भगवान्?**

म नै क्रतु, यज्ञ, स्वधा, औषध, मन्त्र, घिउ, अग्नि र हवनरूप क्रिया हुँ। म नै जान्नयोग्य विधि, पवित्रता, ओंकार, ऋग्वेद, सामवेद र यजुर्वेद हुँ। यस सम्पूर्ण जगत्को पिता, धाता, माता, पितामह, गति, भर्ता, प्रभु, साक्षी, निवास, आश्रय, सुहृद्,

उत्पत्ति, प्रलय, स्थान, निधान र अविनाशी बीज पनि म नै हुँ। हे अर्जुन! म नै सूर्यरूपले तात्दछु, पानीलाई ग्रहण गर्छु र त्यस जललाई वर्षारूपले बर्साइदिन्छु। म नै अमृत र मृत्यु हुँ। थप के भनूँ, सत् र असत् (जड—चेतन) पनि म नै हुँ॥ १६—१९ ॥

**यदि विश्वरूपले सबै थोक तपाईं नै हुनुहुन्छ भने तपाईंलाई छोडेर मानिसले देवताहरूको उपासना किन गर्दछन्?**

सुखभोगको इच्छा भएका मानिसले तीनै वेदमा भनिएका यज्ञादि शुभकर्महरूको अनुष्ठानद्वारा इन्द्रको पूजन गर्दै स्वर्गको याचना गर्दछन्। अनि, सोमरस पिउने र स्वर्ग प्रतिबन्धक पापरहित ती मानिस पुण्यको बलमा विशाल स्वर्गलोकमा जान्छन् र त्यहाँ देवताहरूका दिव्य भोगहरूलाई भोगेर पुण्य क्षीण भएपछि पुनः मृत्युलोकमै आउँछन्। यसप्रकार, तीनै वेदमा बताइएका सकाम अनुष्ठानको आश्रय लिने र भोगहरूको कामना गर्ने मानिसहरू बारम्बार जन्मने र मर्ने गर्दछन्॥ २०—२१ ॥

**यस्तो दशा त सकाम कर्म अनुष्ठानहरूको आश्रय लिनेहरूको हुन्छ, तर कसैले हजुरको आश्रय लियो भने नि?**

जसले अनन्य भएर मेरो चिन्तन गर्दै मेरै उपासना गर्दछन्, ती ममा निरन्तर लागिरहेका भक्तहरूको योगक्षेम मैले स्वयम् वहन गर्दछु, अर्थात् नपाइएका वस्तु प्राप्त गराइदिने र प्राप्तको रक्षा गर्ने काम मैले आफैं गर्दछु॥ २२ ॥

**तर, तपाईंको उपासना नगरी कसैले श्रद्धासाथ अन्य देवताहरूको उपासना गर्‍यो भने नि ?**

हे कुन्तीनन्दन! जसले श्रद्धापूर्वक अन्य देवताहरूको पूजन (उपासना) गर्दछन्, तिनले पनि वास्तवमा ('सत्—असत् सबै म नै हुँ' भन्ने दृष्टिले) मेरै पूजन गर्दछन्, तर उनीहरूद्वारा गरिएको

त्यो पूजन विधिपूर्वक हुँदैन॥ २३॥

**यदि त्यो पूजा तपाईंकै हो भने उनीहरूको त्यो पूजा अविधिपूर्वक किन भयो भगवान्?**

यज्ञ, दान, तप आदि सम्पूर्ण शुभकर्महरूको भोक्ता र सम्पूर्ण संसारको मालिक म नै हुँ, तर तिनले मलाई यसरी तत्त्वपूर्वक जान्दैनन्। यसर्थ, तिनको पतन हुन्छ॥ २४॥

**उनीहरूको त्यो पतन के हो?**

देवताहरूका भक्तले देवतालाई, पितृका भक्तले पितृलाई र भूतप्रेतका भक्तले भूतप्रेतलाई प्राप्त गर्दछन् भने मेरा भक्तले त मलाई नै प्राप्त गर्दछन्॥ २५॥

**जुन भक्तिले हजुरका भक्तले हजुरलाई प्राप्त गर्दछन्, त्यो भक्ति त निकै कठिन होला नि त?**

छैन नि बाबु, त्यो त एकदम सजिलो छ। जुन भक्तले सप्रेम मलाई पत्र, पुष्प, फल, जल आदि अर्पण गर्दछ, त्यो ममा तल्लीन भएको भक्तले सभक्ति दिएको उपहारलाई मैले स्वयम् ग्रहण गर्दछु॥ २६॥

**मैले के गर्नुपर्‍यो त त्यसोभए?**

हे कुन्तीपुत्र, तिमीले जे खान्छौ, जेले यज्ञ गर्दछौ, जे दान दिन्छौ, जे तप गर्दछौ अथवा यसबाहेक जे गर्दछौ, ती सबै मलाई नै अर्पण गरिदेऊ॥ २७॥

**अर्पण गर्दा के हुन्छ, भगवान्?**

बाबु, तिमी बन्धन कारक सम्पूर्ण शुभ—अशुभ कर्महरूका फलदेखि मुक्त भएर मलाई प्राप्त गर्दछौ॥ २८॥

**जसले सबैथोक तपाईंमा अर्पण गर्दछ, उसलाई त हजुरले बन्धनबाट मुक्त गरिदिनहुन्छ, तर जसले सबैथोक हजुरलाई अर्पण**

**गर्दैन, ऊ बन्धनमै रहने त? यस्तो पक्षपात किन नि प्रभो?**

यो पक्षपात होइन नि! म त सम्पूर्ण प्राणीहरूप्रति समान छु। मेरो कसैप्रति पनि द्वेष छैन, न त कोही प्रिय नै छ। तर, जसले प्रेमपूर्वक मेरो भजन गर्दछन्, ती ममा र म तिनमा विशेषरूपले रहन्छौँ॥ २९॥

**यदि कुनै मानिस दुराचारी छ भने के उसले पनि हजुरको भजन गर्न सक्छ त? हजुरको भक्त हुन सक्छ त?**

अवश्य, सक्छ नि। यदि कुनै दुराचारीभन्दा पनि दुराचारी मान्छे पनि यदि सबै छोडेर मेरो भजन गर्दछ भने उसलाई साधु नै भन्नुपर्दछ, किनकि उसले अति राम्रो निश्चय गरेको छ॥ ३०॥

**उसलाई साधु मात्र भन्ने?**

होइन, ऊ त तत्काल धर्मात्मा(महान् पवित्र) बन्दछ र सधैँ रहने शान्तिलाई प्राप्त गर्दछ। हे कुन्तीनन्दन! तिमीले मेरो भक्तको कहिल्यै पनि पतन हुँदैन भन्ने प्रतिज्ञा गर॥ ३१॥

**हजुरको भक्तिका अधिकारी अरू पनि कोही हुन सक्छन् र?**

सक्छन् नि पार्थ, पापयोनि भएका एवम् स्त्री, वैश्य र शूद्रले पनि मेरो आश्रय लिएर मलाई प्राप्त गर्न सक्छन् भने जन्म र कर्मले पवित्र ब्राह्मण र क्षत्रिय मेरा भक्त भए भने त्यो त झन् राम्रो भयो।

**म यस्तो भक्त कसरी बनूँ त भगवान्?**

यो नाशवान् र सुखरहित शरीरलाई प्राप्त गरेर तिमीले मेरो भजन गर॥ ३२—३३॥

**हजुरको भजन मैले कसरी गरूँ?**

तिमी स्वयम् मेरा भक्त बन, ममा नै मन लगाऊ, मेरै पूजा गर्ने बन र मलाई नै नमस्कार गर। यसप्रकार, ममा आफूले आफूलाई लगाएर मेरो परायण भएका तिमीले मलाई नै प्राप्त गर्ने छौ॥ ३४॥

॥ श्रीपरमात्मने नमः ॥

# दसौँ अध्याय

भगवान्‌ले भन्नुभयो—प्रिय अर्जुन, अब तिमीले मेरो परम वचनलाई* सुन, जसलाई तिम्रो हितका लागि म भन्दै छु, किनकि हे महाबाहो! तिमीले मलाई अत्यन्त प्रेम गर्दछौ।

**त्यो परम वचन के हो भगवान्?**

यो सम्पूर्ण संसार मैले नै प्रकट गरेको हुँ भन्ने कुरालाई न देवताले राम्रोसित जान्दछन्, न महर्षिले नै जान्दछन्, किनकि म पूर्णतः देवता र महर्षिहरूको पनि आदि हुँ॥१-२॥

**यदि सबैका मूल तपाईंलाई देवता र महर्षिहरूले पनि जान्दैनन् भने मानिसले हजुरलाई कसरी जान्दछन् र तिनको कल्याण हुन्छ त?**

जसले मलाई अजन्मा, अविनाशी र सम्पूर्ण लोकका महान् ईश्वर ठान्दछ, अर्थात् दृढतासाथ जान्दछ, त्यो मानिसमध्ये पनि जानकार छ र सम्पूर्ण पापहरूबाट छुट्छ॥ ३ ॥

**हजुरको त्यो परम वचन मैले कसरी बुझूँ त भगवान्?**

बुद्धि, ज्ञान, मोहरहित हुनु, क्षमा, सत्य, इन्द्रियहरूलाई

---

* सबैका मूलमा आफूले आफूलाई अभिव्यक्त गर्नु नै भगवान्‌को परम वचन हो।

वशमा राख्नु, मनलाई वशमा राख्नु, सुख, दुःख उत्पन्न हुनु, लीन हुनु, भय, अभय, अहिंसा, समता, सन्तोष, तप, दान, यश र अपयश यी प्राणीहरूका अनेक प्रकारका अलग अलग भाव मेरै कारणले हुन्छन्। यी केवल भाव मात्रै होइनन्, जसले ममा श्रद्धा—भक्ति राख्दछन् र जसको संसारमा यी सम्पूर्ण प्रजा छन्, ती सात महर्षि र उनीहरूमध्ये पनि पहिलो हुने चार सनकादि तथा चौध मनु पनि मेरै मनबाट उत्पन्न भएका हुन्, अर्थात् ती सबैको उत्पादक र शिक्षक म नै हुँ॥ ४—६ ॥

**हजुरले बुद्धि, ज्ञान आदि र महर्षि आदि मबाटै उत्पन्न हुन्छन् भन्नुको अर्थ के हो?**

जसले मेरो यो विभूति र योगलाई* श्रद्धासाथ दृढतापूर्वक मान्दछ, उसको ममा अविचलित भक्ति हुन जान्छ, यसमा कुनै सन्देह छैन॥ ७ ॥

**यो दृढतासाथ मान्नु भनेको के हो?**

म नै संसारमात्रको मूल कारण हुँ र मबाटै यो सारा संसारले चेष्टा गरिरहेको हुन्छ भनेर दृढतासाथ मानेर ममा नै श्रद्धाप्रेम राख्ने बुद्धिमान् भक्तले मेरै भजन गर्दछन्॥ ८ ॥

**उनीहरूको भजनको प्रकार कस्तो हुन्छ?**

ममा मन भएको, ममा प्राण अर्पण गर्ने भक्तजनले आपसमा मेरा गुण, प्रभाव आदि जनाउँदै तिनको उच्चारण गर्दै नित्यनिरन्तर सन्तुष्ट रहन्छन् र ममा नै प्रेम गर्दछन्॥ ९ ॥

**यस्ता भक्तका लागि हजुरले के गर्नुहुन्छ?**

---

* भगवानको सामर्थ्यको नाम योग हो र यस योगबाट प्रकट हुने जति पनि ऐश्वर्य छ, त्यसको नाम 'विभूति' हो।

यस्ता नित्य—निरन्तर ममा नै लागिरहेका र प्रेमपूर्वक मेरै भजन गर्ने भक्तहरूलाई मैले नै आफ्नातर्फबाट त्यो बुद्धियोग (समता) प्रदान गर्दछु, जसका माध्यमले तिनले मलाई प्राप्त गर्न सक्दछन्॥ १० ॥

**यसबाहेक पनि हजुरले अरु केही गर्नुहुन्छ?**

अवश्य, ती भक्तहरूमाथि कृपा गर्नका लागि उनीहरूको स्वरूपमा स्थित रहेको मैले उनीहरूको अज्ञानजन्य अन्धकारलाई देदीप्यमान ज्ञानरूपी दीपकले नष्ट गरिदिन्छु॥ ११ ॥

अर्जुनले भने—अहो! हे भगवान्! भक्तहरूमाथि हजुरको अलौकिक, विलक्षण कृपाको कुरा सुनेर गद्गद् भएको छु। हे प्रभो! निर्गुण निराकार ब्रह्म, सबैका परम स्थान र महान् एवम् पवित्र हजुर नै हुनुहुन्छ। हजुर शाश्वत, दिव्य पुरुष, आदिदेव, अजन्मा र विभु (व्यापक) हुनुहुन्छ भनेर सबै ऋषि, देवर्षि नारद, असित, देवल तथा व्यासले भन्दछन् र हजुरले नै पनि मलाई भन्नुहुन्छ॥ १२–१३ ॥

**मैले जे भन्छु, के तिनमा तिमीलाई विश्वास छ त अर्जुन?**

छ केशव, मसित हजुरले जे भन्नुभएको छ, ती सबै मैले सत्य मानेको छु। हे भगवान्! हजुर प्रकट हुने कुरालाई न त दिव्यशक्ति भएकाले जान्दछन्, न त विलक्षण मायाशक्ति भएका दानवहरूले नै जान्दछन्॥१४॥

**देवताले पनि जान्दैनन् भने कसले जान्दछ त?**

हे भूतभावन! हे भूतेश! हे देवदेव! हे जगत्पते! हे पुरुषोत्तम! हजुर स्वयंले आफूले आफूलाई जान्नुहुन्छ। यसर्थ, हजुले जुन विभूतिहरूले सारा संसारलाई व्याप्त बनाएर स्थित हुनुहुन्छ, ती सबै दिव्य विभूतिहरूलाई समग्रतासाथ बताउनका लागि हजुर नै

समर्थ हुनुहुन्छ॥ १५–१६ ॥

**विभूतिहरूलाई सुनेर के गर्छौं?**

यो योगिन्! सधैँ साङ्गोपाङ्ग चिन्तन गरिरहेर मैले हजुरलाई कसरी जानूँ? हे भगवान्! कुनकुन भावले मैले हजुरको चिन्तन गरूँ? यसर्थ, हे जनार्दन! हजुरले आफ्ना विभूति र योगलाई सविस्तार फेरि बताउनुहोस्, किनकि हजुरको अमृतमय वचन सुनेर म अझै अघाएको छैन॥ १७–१८॥

भगवान्ले भन्नुभयो— त्यसोभए ठीक छ। मैले आफ्ना दिव्य विभूतिहरूलाई तिम्रानिम्ति सङ्क्षेपमा बताउँछु, किनकि हे कुरुश्रेष्ठ! मेरा विभूतिहरूको विस्तारको अन्त छैन॥ १९ ॥

**हजुरका ती दिव्य विभूतिहरू केके हुन्, भगवान्?**

हे गुडाकेश! सम्पूर्ण प्राणीहरूको आदि, मध्य र अन्तमा म नै छु भने प्राणीहरूभित्र अन्तःकरणमा आत्मरूपले पनि म नै छु। अदितिका पुत्रहरूमा विष्णु (वामन) र प्रकाशमान चिजहरूमा किरणयुक्त सूर्य म नै हुँ। हावाहरूको तेज र नक्षत्रहरूको अधिपति चन्द्रमा म नै हुँ। वेदहरूमा सामवेद, देवताहरूमा इन्द्र र मन अनि प्राणीहरूमा चेतना (प्राणशक्ति) म नै हुँ। रुद्रहरूमा शङ्कर, यक्ष राक्षसहरूमा कुबेर, वसुहरूमा अग्नि र शिखरयुक्त पर्वतहरूमा मेरु म नै हुँ। हे पार्थ! पुरोहितहरूमा मुख्य बृहस्पति मेरै स्वरूप हो भन्ने ठान।

**हजुरका अन्य विभूति केके हुन् त?**

सेनापतिहरूमा स्कन्द र जलाशयहरूमा समुद्र हुँ म। महर्षिहरूमा भृगु, वाणीहरूमा (शब्दहरूमा) एक अक्षर (प्रणव), सम्पूर्ण यज्ञहरूमा जपयज्ञ र स्थिर हुनेहरूमा हिमालय म नै हुँ। सम्पूर्ण वृक्षहरूमा पीपल, देवर्षिहरूमा नारद, गन्धर्वहरूमा चित्ररथ र

सिद्धहरूमा कपिलमुनि म नै हुँ। घोडाहरूमा अमृतसहित समुद्रबाट प्रकट हुने उच्चैःश्रवा नामक घोडा, श्रेष्ठ हात्तीहरूमध्ये ऐरावत र मानिसहरूमा राजालाई मेरा विभूति मान॥ २०—२७॥

**हजुरका अन्य विभूतिहरू कुनकुन हुन् त भगवान्?**

अस्त्रशस्त्रहरूमा वज्र र धेनुहरूमा कामधेनु म नै हुँ। धर्मको अनुकूल सन्तानोत्पत्तिको हेतु कामदेव म नै हुँ र सर्पहरूमा वासुकि म नै हुँ। नागहरूमा शेषनाग, जलजन्तुहरूका अधिपति वरुण, पितृहरूमा अर्यमा र शासन गर्नेहरूमध्ये यमराज पनि मै हुँ। दैत्यहरूमा प्रह्लाद, गणना गर्नेहरूमा काल, पशुहरूमा सिंह र पक्षीहरूमा गरुड म नै हुँ। शुद्ध तुल्याउनेमध्ये वायु, शस्त्रधारीहरूमध्ये राम, जलजन्तुहरूमा मगर(गोही) र बग्ने स्रोतमध्ये गङ्गा म हुँ॥ २८—३१॥

**अन्य केकेमा हजुर हुनुहुन्छ?**

हे अर्जुन! सम्पूर्ण सर्गहरूको आदि, मध्ये र अन्तमा म नै छु। विद्याहरूमा अध्यात्मविद्या र परस्पर शास्त्रार्थ गर्नेहरूको तत्त्व निर्णयार्थ गरिने वाद पनि म नै हुँ। अक्षरहरूमा अकार र समासहरूमा द्वन्द्व समास म नै हुँ। अक्षयकाल अर्थात् काल-हरूको पनि महाकाल तथा सबैतिर मुख भएको धाता पनि मै हुँ॥ ३२-३३॥

**हजुरका अन्य रूप कुनकुन हुन्?**

सबैलाई हरण गर्ने मृत्यु र उत्पन्न हुने उत्पत्तिको हेतु हुँ म। स्त्रीहरूमा कीर्ति, श्री, वाक्, स्मृति, मेधा, धृति र क्षमा म नै हुँ। गाउन मिल्ने श्रुतिहरूमा बृहत्साम र वैदिक छन्दहरूमा गायत्री छन्द हूँ। बाह्र महिनामा मङ्सिर र छ ऋतुहरूमा वसन्त हुँ म।

छल गर्नेहरूमध्ये जुवा र तेजस्विहरूमा तेज हुँ म। त्यस्तै, जित्नेहरूको विजय, निश्चय गर्नेहरूको निश्चय र सात्त्विक पुरुषहरूको सात्त्विक भाव म नै हुँ॥ ३४—३६ ॥

**त्यस्तै अन्य रूप केके छन्, प्रभो?**

वृष्णि वंशीहरूमा वासुदेव, पाण्डवहरूमा धनञ्जय(तिमी), मुनिहरूमा वेदव्यास र कविहरूमा शुक्राचार्य म नै हुँ। दमन गर्नेहरूमा दण्ड, विजय चाहनेहरूमा नीति, गोपनीय भावहरूमा मौन र ज्ञानवान्हरूमा ज्ञान म नै हुँ। त्यतिमात्रै होइन, सम्पूर्ण प्राणीहरूको बीज(कारण) म नै हुँ, किनकि हे अर्जुन! मबिना कुनै पनि चराचर प्राणी हुँदैनन्, अर्थात् चर—अचर सबै म नै हुँ॥ ३७—३९ ॥

**के हजुरले आफ्ना सबै विभूतिहरू बताउनुभयो नाथ?**

छैन परंतप, मेरा दिव्य विभूतिहरूको अन्त छैन। मैले तिम्राअगाडि आफ्ना विभूतिहरूको जसरी विस्तार गरेँ, त्यो त सङ्क्षेपमा बताएको हुँ, किनकि मैले मेरा विभूतिहरूलाई पूर्णतः बताउन सक्दिनँ॥ ४० ॥

**तापनि, हजुरका विभूतिहरूको खास पहिचान के हो नि भगवान्?**

संसारमा जेजे ऐश्वर्ययुक्त, शोभायुक्त र बलयुक्त वस्तु छन्, तिनलाई तिमीले मेरै तेज (योग) को कुनै अंशबाट उत्पन्न भएको भन्ने मान। बाबु अर्जुन! सम्पूर्ण जगत् (अनन्तकोटि ब्रह्माण्डहरू)लाई आफ्नो कुनै एक अंशमा व्याप्त गरेर मैले तिम्रा हातमा लगाम र कोर्रा लिएर बसेको छु, तिम्रो आज्ञाको पालन गर्दछु भने तिमीलाई यस्ता अनेक कुरा किन जान्नु पर्‍यो?॥ ४१-४२ ॥

॥ श्रीपरमात्मने नमः ॥

# एघारौँ अध्याय

अर्जुनले भने—हे भगवान्! केवल ममाथि कृपा गर्नका लागि नै हजुले जुन परम गोपनीय आध्यात्मिक रहस्य( सबैको केन्द्रमा म छु) भन्नुभएको छ, त्यसले गर्दा मेरो मोह हराएको छ। हे कमलनयन! मैले हजुरसित सम्पूर्ण प्राणीहरूको उत्पत्ति र प्रलयका कुरा पनि सुनेँ र हजुरको अविनाशी महात्म्य पनि सविस्तार सुनेँ ॥ १-२ ॥

**अब तिमीलाई अरु के चाहियो त?**

हे पुरुषोत्तम! हजुरले आफूलाई जस्तो भन्नहुन्छ, वास्तवमा त्यस्तै हुनुहुन्छ। अब हे परमेश्वर! मैले हजुरको त्यो परम स्वरूप देख्न चाहन्छु, जसको एउटा अंशमा अनन्तकोटि ब्रह्माण्ड व्याप्त छन्। तर, हे प्रभो! यदि मैले त्यो परम स्वरूप देख्न सक्छु भन्ने हजुरलाई लाग्छ भने त्यो हजुरको अविनाशी स्वरूप मलाई देखाइदिनुस्॥ ३-४ ॥

भगवान्ले भन्नुभयो— हे पार्थ! तिमीले मेरो एउटा मात्रै रूपलाई किन, मेरा सयौँ, हजारौँ रूपलाई हेर, जो दिव्य छन्, अनेक प्रकारका छन्, अनेक रङ्गका छन् र अनेक किसिमको आकृतिका छन्॥ ५ ॥

**अरु के हेरौँ भगवान्?**

हे भारत! तिमी आदित्य, वसु, रुद्र, अश्विनीकुमार एवम् मरूतहरूलाई पनि हेर। जुन रूपलाई तिमीले पहिला कहिल्यै देखेका थिएनौ, ती विभिन्न आश्चर्यजनक रूपहरूलाई पनि तिमीले हेर॥ ६ ॥

**मैले कहाँ हेरूँ, भगवान्?**

हे निद्राविजयी अर्जुन! मेरो यो शरीरको कुनै पनि एउटा

अंशमा चराचरसहित सम्पूर्ण जगत्लाई तिमीले अहिल्यै हेर। यदि यसबाहेक पनि तिमीले अन्य केही हेर्न चाहन्छौ भने ती पनि तिमीले हेर* ॥ ७ ॥

**हजुरले लगातार 'तिमीले हेर, तिमीले हेर' मात्रै भन्नुभएको छ, तर मैले त केही पनि देखिरहेको छैन, कसरी देखूँ?**

बाबु, तिमीले आफ्ना यी चर्मचक्षुले मलाई देख्न सक्दैनौ। लौ, मैले तिमीलाई दिव्य चक्षु दिन्छु, यसकै बलमा तिमीले मेरो ईश्वरसम्बन्धी दिव्य सामर्थ्यलाई हेर ॥ ८ ॥

**यसो गरेपछि भगवान्ले के गर्नुभयो त सञ्जय?**

सञ्जयले भने— हे राजन्! यति भनेर महायोगेश्वर भगवान् श्रीकृष्णले अर्जुनलाई आफ्नो परम ऐश्वर्यमय रूप देखाउनुभयो ॥ ९ ॥

**कस्तो रूप देखाउनुभयो?**

जसका अनेक मुख र आँखा छन्, अनेक किसिमका अद्‌भुत दर्शन छन्, अनेक दिव्य गहना छन् र जसले हातमा अनेक किसिमका दिव्य अस्त्रशस्त्र उठाउनुभएको छ, अनेक दिव्य माला र वस्त्र धारण गर्नुभएको छ, शरीरमा अनेक दिव्य चन्दन आदि लगाउनुभएको छ, यस्ता सर्वथा आश्चर्यमय र चारैतिर मुखभएको आफ्नो अनन्तरूप देखाउनुभयो ॥ १०-११ ॥

**त्यो रूप आश्चर्यमय किन थियो, सञ्जय?**

यदि आकाशमा हजारौँ सूर्य एकै पटक उदाई त्यो सबै मिल्दा पनि विश्वरूपको प्रकाशका अगाडि केही हुँदैन, त्यस्तो ॥ १२ ॥

**अर्जुनले त्यो रूप कहाँ देखे?**

* अर्जुनले अरु के देख्न चाहन्थे? अर्जुनको मनमा युद्धमा हामै जित हुन्छ अथवा कौरवको भन्ने सन्देह थियो। यसर्थ भगवान्ले भन्नुहुन्छ कि त्यसलाई पनि तिमीले मेरो यही शरीरको एक अंशमा हेर।

अर्जुनले देवहरूका पनि देव भगवान्को शरीरको एउटा अंशमा सम्पूर्ण संसारलाई अनेक विभागहरूले युक्त देखे॥ १३॥

**सञ्जय, त्यो रूपलाई देखेर अर्जुनले के गरे त?**

भगवान्को त्यो विश्वरूपलाई देखेर अर्जुन निकै आश्चर्यचकित भए भने उनका रौँ ठाडा भए। उनले हात जोडेर र शिर झुकाएर प्रणाम गर्दै विश्वरूप भगवान्को स्तुति गर्न थाले॥ १४॥

**अर्जुनले के भने त सञ्जय?**

अर्जुनले भने— हे देव! मैले हजुरको शरीरमा सम्पूर्ण देवता, प्राणी, विशेष समुदाय, कमलासनमाथि बस्नुभएका ब्रह्माजी, कैलाशमा विराजमान शङ्कर, सम्पूर्ण ऋषि एवम् दिव्य सर्पहरूलाई देखेको छु॥ १५॥

हे विश्वरूप! हे विश्वेश्वर! मैले हजुलाई अनेक पेट, हात, मुख र आँखा भएका एवम् सबैतिरबाट अनन्तरूपयुक्त देखिरहेको छु। म हजुरको आदि, मध्य र अन्तलाई पनि देखिरहेको छैन। मैले हजुरको शिरमा मुकुट तथा हातमा गदा, चक्र(शङ्ख र पद्म) धारण गर्नुभएको, तेजका समूह, सबैतिर प्रकाश छर्ने, देदीप्यमान अग्नि र सूर्यसमान कान्तिभएका, आँखाले बल्लबल्ल देख्न सकिने र सबैतिरबाट अप्रमेयस्वरूपलाई देखिरहेको छु॥ १६-१७॥

हे नाथ! हजुर नै जान्नका लागि योग्य परम अक्षरब्रह्म हुनुहुन्छ, हजुर नै यस सम्पूर्ण विश्वका परम आधार हुनुहुन्छ र हजुर नै सनातनधर्मको रक्षा गर्ने सनातन पुरूष हुनुहुन्छ भन्ने मलाई लाग्छ॥१८॥

**केवल मानिरहेका छौ कि देखिरहेका पनि छौ, अर्जुन?**

मैले हजुरलाई आदि, मध्य, अन्तरहित, अनन्त, प्रभावशाली, अनन्त भुजाभएका, चन्द्र र सूर्यरूप आँखा भएका, प्रज्वलित

अग्निसमान मुख भएका र आफ्नो तेजले सम्पूर्ण संसारलाई तताउँदै गरेका देखिरहेको छु॥ १९॥

हे महात्मन्! यो स्वर्ग र पृथ्वीको बीचमो अन्तराल र दशै दिशाहरू एक हजुरसितै परिपूर्ण भइरहेका छन्। हजुरको यो अद्भुत एवम् उग्ररूपलाई देखेर तीनै लोक व्यथित हुँदै छन्। अहो! तिनै देवताका समुदाय (जसलाई मैले पहिला स्वर्गमा देखेको थिएँ) हजुरमा प्रवेश गरिरहेका छन्। उनीहरूमध्ये पनि कति त भयभीत भएर हात जोड्दै हजुरका नाम र गुणको कीर्तन गरिरहेका छन्। महर्षि र सिद्धहरूको समुदाय 'कल्याण होस्! मङ्गल होस्!' भन्दै उत्तमभन्दा उत्तम स्तोत्रहरूले हजुरको स्तुति गरिरहेका छन्॥ २०-२१॥

जो रूद्र, आदित्य, वसु, साध्यगण, विश्वेदेव, अश्विनीकुमार, मरूद्गण, पितृ, गन्धर्व, यक्ष, असुर र सिद्धहरूका समुदाय छन्, ती पनि सबै आश्चर्यचकित भएर हजुरलाई हेरिरहेका छन्॥ २२॥

हे महाबाहो! हजुरका अनेक मुख, आँखा, हातपाखुरा, जाँघ, गोडा, अनेक पेटभएको एवम् विकराल दाह्री भएको विशालरूपलाई देखेर सबै प्राणी भयभीत भइरहेका छन् भने म स्वयम् पनि भयभीत भइरहेको छु॥ २३॥

हे विष्णु! अनेक प्रदीप्त वर्णभएको, आकाशको स्पर्श गर्ने, फैलिएको मुख भएको एवम् प्रदीप्त र विशाल आँखा भएको देदीप्यमान रूपलाई देखेर भित्रैबाट भयभीत भएको मैले धैर्य र शान्ति पाइरहेको छैन। हजुरको प्रलयकालको अग्निसमान प्रज्वलित र दाह्रीका कारण भयानक मुखलाई देखेर मैलाई न त दिशाबोध भइरहेको छ, न त शान्ति नै प्राप्त भएको छ। यसैले, हे देवेश! हे जगन्निवास! हजुर प्रसन्न हुनुहोस्॥२४-२५॥

हाम्रो पक्षका मुख्य योद्धासहित भीष्म, द्रोण र कर्ण पनि हजुरमा प्रवेश गर्दै छन्। राजाहरूको समुदायसहित धृतराष्ट्रका सम्पूर्ण पुत्र हजुरको विकराल दाह्रीले भयङ्कर देखिएको मुखमा तीव्रतासाथ प्रवेश गरिरहेका छन्। उनीहरूमध्ये कति त चूर्ण भएका शिरसहित हजुरको दाँतको बीचमा अल्झिरहेका देखिँदै छन्॥ २६-२७॥

जसरी नदीका कति पानीका प्रवाहरू स्वाभाविकरूपमा समुद्रतिर दौडिन्छन्, त्यसरी नै मनुष्यलोकका ती भीष्म, द्रोण आदि महान् शूरवीरहरू हजुरको प्रज्वलित मुखमा प्रवेश गरिरहेका छन्। जसरी पतिङ्गरहरू मोहवश आफ्नो नाशका लागि अत्यन्त वेगका साथ प्रज्वलित अग्निमा प्रवेश गर्दछन्, त्यसैगरी दुर्योधन आदि सबै मानिस मोहवश आफ्नो नाश गर्नका लागि निकै तीव्रतासाथ प्रवेश गर्दै छन् भने हजुर पनि आफ्नो प्रज्वलित मुखद्वारा सबैलाई खाँदै चारैतिरबाट बारम्बार चाटिरहनुभएको छ। हे विष्णो! हजुरको उग्र प्रकाशले आफ्नो तेजमार्फत सम्पूर्ण जगत्लाई परिपूर्ण गर्दै सबैलाई सन्तप्त गरिरहेको छ॥ २८—३०॥

**हे देवश्रेष्ठ! हजुरलाई नमस्कार! हजुर प्रसन्न हुनुहोस्। आदिरूप हजुरलाई मैले तत्त्वपूर्वक जान्दछु। मलाई बताउनुस् कि यस्तो उग्ररूपधारी हजुर को हुनुहुन्छ?**

भगवान्ले भन्नुभयो—सम्पूर्ण लोकलाई नाश गर्ने म बढेको काल हुँ।

**हजुर यहाँ किन आउनुभएको हो नि?**

यतिबेला म यिनीहरूको संहार गर्नका लागि म यहाँ आएको हुँ।

**हजुरबाट कोही बाँच्नेवाला छन् कि छैनन्, यहाँ?**

तिम्रो प्रतिपक्षमा जति पनि योद्धा उभिएका छन्, ती तिमीले युद्ध नगरे पनि रहने छैनन्। यी सबै मद्वारा पहिल्यै मारिइसकेको छन्। यसर्थ, तिमी युद्धका लागि तयार बन र यशलाई प्राप्त गर्दै शत्रुमाथि विजय प्राप्त गरी धनधान्यले परिपूर्ण राज्यलाई प्राप्त गर॥

**त्यसोभए मैले युद्ध किन गर्नुपर्‍यो त नि?**

हे सव्यसाचिन्! तिमी केवल निमित्तमात्र बन॥ ३१—३३॥

**तर, भगवान्! भीष्म, द्रोण, जयद्रथ, कर्णलगायत शूरवीरहरूमाथि कसरी विजय हुन्छ र?**

भीष्म, द्रोण, जयद्रथ, कर्ण तथा अन्य जति पनि शूरवीरहरू छन्, ती सबै मद्वारा पहिल्यै मारिइसकेका छन्। ती मद्वारा पहिल्यै मारिइसकेका शूरवीरहरूलाई नै तिमीले मार। अतः तिमी नडराऊ र युद्ध गर। युद्धमा तिमीले सबै शत्रुहरूलाई जित्ने छौ॥ ३४॥

**त्यसपछि के भयो त सञ्जय?**

सञ्जयले भने—भगवान् केवशका यी वचन सुनेपछि भयले काम्दै गरेका अर्जुन हात जोडेर नमस्कार गर्दै र अत्यन्त भयभीत हुँदै फेरि प्रणाम गर्दै गद्‌गद् वाणीले कृष्णको स्तुति गर्न थाले॥ ३५॥

अर्जुनले भने—हे अन्तर्यामी भगवान्! हजुरका गुण, नाम, आदिको कीर्तन गर्नाले यो सम्पूर्ण जगत् हर्षित भइरहेको छ र अनुराग प्राप्त गरिरहेको छ। हजुरका नाम, गुण आदिको कीर्तनबाट डराएर राक्षसहरू दशौँ दिशातिर भागिरहेका छन् भने सिद्धहरूका समुदायले हजुलाई बारम्बार नमस्कार गरिरहेका छन्। जे भएको छ, उचित भएको छ॥ ३६॥

**किन उचित भएको छ, अर्जुन?**

किनकि हजुर अनन्त हुनुहुन्छ, सम्पूर्ण देवताका मालिक हुनुहुन्छ र यस जगत्का आधार हुनुहुन्छ। हजुर अक्षरस्वरूप हुनुहुन्छ। हजुर सत् पनि हुनुहुन्छ, असत् पनि हुनुहुन्छ भने सत्असत्भन्दा पर जे छ, त्यो पनि तपाईं नै हो। हे महात्मन्! हजुर गुरुहरूका पनि गुरु र ब्रह्मालाई पनि जन्माउने हुनुहुन्छ हजुरलाई सिद्धहरूका समुदायले किन नमस्कार नगरून् त?॥ ३७॥

हजुर नै आदिदेव र पुराणपुरूष हुनुहुन्छ। हजुर नै यस संसारका परम आधार हुनुहुन्छ। हजुर नै सबैलाई जान्ने र जान्न योग्य हुनुहुन्छ। हजुर नै सबैका परम गन्तव्यस्थान हुनुहुन्छ। हे अनन्तरूप! हजुरबाटै सम्पूर्ण संसार व्याप्त छ॥ ३८॥

हजुर नै वायु, यमराज, अग्नि, वरुण, चन्द्रमा, प्रजापति र पितामह ब्रह्माजीका पनि पिता हुनुहुन्छ। यसर्थ, हजुरलाई हजारौँ पटक नमस्कार! नमस्कार! बारम्बार नमस्कार! हे सर्व! हजुरलाई अगाडि, पछाडि सबैतिरबाट नमस्कार! हे अनन्तवीर्य! हजुर अमितविक्रमवाला हुनुहुन्छ। हजुर सर्वत्र संसारमा व्याप्त हुनुहुन्छ, अतः सबै हजुर नै हुनुहुन्छ॥ ३९–४०॥

हे भगवान्! हजुरको यो महिमा र स्वरूपलाई नजान्दा मैले हजुरलाई आफ्नो साथी मानेर प्रमादवश अथवा प्रेमवश(नबुझीकन) 'हे कृष्ण! हे यादव! हे सखा!' भन्दै जे भनेँ, हे अच्युत! घुम्दाफिर्दा, सुत्दाउठ्दा, उठ्दाबस्दा र खाँदापिउँदा एक्लै अथवा ती साथी, इष्टमित्र आदिका अगाडि हाँसोठट्टामा हजुरलाई जसरी तिरस्कार गरेँ, त्यसका लागि म अप्रमेयरूपले हजुरसित माफी माग्छु॥ ४१–४२॥

हजुर नै यस चराचर जगत्का पिता हुनुहुन्छ, हजुर नै पूजनीय र गुरुका पनि महान् गुरु हुनुहुन्छ। हे असीम प्रभावयुक्त भगवन्!

यस त्रिलोकमा हजुरसमान अर्को कोही छैन भने हजुरभन्दा ठूलो झन् को नै हुन सक्छ र? यसर्थ, लम्पसार शरीरले ढोग गर्न योग्य हजुर ईश्वरलाई मैले प्रणाम गरी प्रसन्न तुल्याउन चाहन्छु। जसरी, पिताले पुत्रको, साथीले साथीको र पतिले पत्नीको तिरस्कारलाई सहन्छ, त्यसैगरी हे देव! हजुरले मैले गरेको अपमानलाई पनि सहन गर्नुहोस्॥ ४३-४४॥

**ठीक छ, अब भन के चाहन्छौ?**

हजुरको यस्तो अपूर्वरूपलाई देखेर म हर्षित पनि भएको छु भने डरले मन पनि व्याकुल भइरहेको छ। अतः हे देवेश! हे जगन्निवास! हजुर प्रसन्न हुनुस् र आफ्नो त्यही देवरूप(विष्णुरूप) देखाउनुस्, जुन शिरमा मुकुट धारण गरिएको, हातमा गदाचक्र, शङ्ख र पद्म लिएको छ। मैले यतिबेला हजुरको त्यही रूपलाई देख्न चाहन्छु। हे सहस्रबाहो! हे विश्वमूर्ते! हजुर त्यही चतुर्भुजरूपमा प्रकट हुनुस्॥ ४५-४६॥

भगवान्ले भन्नुभयो—हे अर्जुन! मैले निकै प्रसन्न भएर आफ्नो सामर्थ्यसाथ तिमीलाई यो अत्यन्त श्रेष्ठ, तेजोमय, सबैको आदि र अनन्त विश्वरूप देखाएँ, जसलाई तिमीबाहेक कसैले पनि पहिला देखेको छैन॥ ४७॥

**हजुरको यो विश्वरूपलाई मानिसले कुन साधनले देख्न सक्छ त भगवान्?**

कुनै पनि साधनले सक्दैन। हे कुरूप्रवीर! मनुष्यलोकमा तिमीजस्तो कृपापात्रबाहेक यस्तो रूपलाई कुनै वेदाध्ययन, यज्ञ, दान, उग्र तपस्या र ठूलाठूला क्रियाहरूले पनि देख्न सकिँदैन॥ ४८॥

**तर, भगवान्! यतिबेला त मैले हजुरको भयानकरूपलाई देखेर साह्रै डराइरहेको छु, के गरूँ?**

हेर बाबु, मेरो यो रूपलाई देखेर तिमी डराउनुपर्दैन र आफूमा विमूढ (मोह) भाव पनि आउन दिनुहुँदैन। अब तिमी भयरहित र प्रसन्न मन बनाएर मेरो त्यही रूपलाई फेरि हेर॥ ४९॥

**यति भनेपछि भगवान्‌ले अर्जुनलाई कुनचाहिँ रूप देखाउनुभयो त सञ्जय?**

सञ्जयले भने—यति भनेर भगवान् वासुदेवले अर्जुनलाई आफ्नो चतुर्भुजरूप देखाउनुभयो। त्यसपछि भगवान्‌ले पुनः सौम्य द्विभुजरूप भएर भयभीत अर्जुनलाई आश्वासन दिनुभयो॥ ५०॥

**अब त तिम्रो डर हट्यो, होइन अर्जुन?**

अर्जुनले भने—हे जनार्दन! हजुरको यो सौम्यरूप देखेर अब भने मेरो चित्त स्थिर भएको छ र म स्वाभाविक स्थितिमा आएको छु॥ ५१॥

भगवान्‌ले भन्नुभयो—तिमीले यो जुन चतुर्भुजरूप देखेका छौ, यसको दशन साह्रै दुर्लभ छ, देवताहरू पनि यस रूपलाई हेर्न सधैँ लालायित रहन्छन्। तिमीले मलाई जस्तो देखेका छौ, त्यस्तो त म वेदले, तपले, दानले र यज्ञले पनि देखिन सक्दिनँ॥ ५२–५३॥

**त्यसोभए हजुर कसरी देखिनुहुन्छ त?**

हे शत्रुतापन अर्जुन! यसप्रकार, चतुर्भुजवाला म अनन्यभक्तिले नै देखिन सक्छु। देखिने मात्रै होइन, तत्त्वपूर्वक जान्न पनि सकिन्छ, प्राप्त गर्न पनि सकिन्छ॥ ५४॥

**त्यो अनन्य भक्ति कस्तो हुन्छ, भगवान्?**

हे पाण्डव! सबै कर्मलाई मेरालागि गर्नु, मेरै परायण हुनु, मेरै भक्त हुनु, आसक्तिरहित हुनु र कुनै पनि प्राणीसित वैरभाव नराख्नु, यस्तो खालको भक्तिले युक्त भक्तले मलाई प्राप्त गर्दछ॥ ५५॥

॥ श्रीपरमात्मने नमः ॥

# बाह्रौँ अध्याय

**अर्जुनले भने—भर्खरै हजुरले भन्नुभयो, कतिले निरन्तर हजुरमै लागेर हजुर (सगुण साकार) को उपासना गर्दछन् भने कतिले हजुरको अक्षर अव्यक्तरूप (निर्गुण—निराकाररूप) को उपासना गर्दछन्। यी दुई प्रकारका उपासकमा कुन चाहिँ उपासक श्रेष्ठ हुन्छन्?॥ १ ॥**

भगवान्ले भन्नुभयो—ममा मन लगाएर नित्य—निरन्तर ममा लागिरहेका जुन भक्त परम श्रद्धाले युक्त भएर मेरो उपासना गर्दछन्, तिनलाई मैले सर्वश्रेष्ठ उपासक मान्दछु॥ २ ॥

**तर, जसले हजुरको अव्यक्तरूपको उपासना गर्दछन्, उनीहरूले नि?**

सबै ठाउँमा समबुद्धि भएका प्राणीमात्रको हितमा रत रहने जुन मनुष्यले आफ्ना इन्द्रियलाई वशमा राखेर सबैतिर परिपूर्ण, अचिन्त्य, कूटस्थ, अचल, अनिर्देश्य, ध्रुव, अक्षर र अव्यक्तको उपासना गर्दछन्, तिनले पनि मलाई प्राप्त गर्दछन्॥ ३–४ ॥

**त्यसोभए हजुरको भक्ति गर्नेहरू कसरी श्रेष्ठ भए त?**

अव्यक्तमा आसक्त चित्त भएका मानिसले अव्यक्तस्वरूपको उपासना गर्दछन्, तिनलाई आफ्ना साधनामा धेरै कष्ट हुन्छ, किनकि देहाभिमानीहरूलाई अव्यक्तको प्राप्ति निकै कठिनतासाथ

हुन्छ। तर, जसले सम्पूर्ण कर्मलाई ममा नै अर्पण गरेर मेरै परायण भएका छन् र अनन्यभावले मेरै ध्यान गर्दै मेरो उपासना गर्दछन्, हे पार्थ! ती ममा चित्त लगाएका भक्तहरूलाई मैले आफैँले मृत्युरूपी संसारको सागरबाट अति छिटो उद्धार गरिदिन्छु॥ ५—७॥

**यस्तो भक्त म कसरी बन्न सक्छु त भगवान्?**

तिमीले ममा नै आफ्नो मनलाई लगाऊ, बुद्धिलाई लगाऊ। ममा नै मनबुद्धि लगाएपछि तिमी मभित्रै बस्छौ, यसमा कुनै सन्देह छैन। यदि यसरी मनबुद्धिलाई ममा स्थिर गर्न तिमी असमर्थ छौ भने हे धनञ्जय! तिमी अभ्यास योगका माध्यमले मेरो प्राप्तिको इच्छा गर। यदि तिमी अभ्यास योगमा पनि असमर्थ छौ भने मेरालागि कर्म गर्ने बन। मेरालागि कर्म गर्नाले पनि तिमीले सिद्धि प्राप्त गर्न सक्छौ। यदि तिमी मेरालागि कर्म गर्न पनि असमर्थ छौ भने मन र बुद्धिलाई वशमा राखेर सम्पूर्ण कर्मको फललाई त्याग गर॥ ८—११॥

**यसक्रमले हेर्दा त कर्मका फलको त्याग गर्ने कुरा चौथो नम्बरमा पो आयो त, है भगवान्?**

हो नि, योग (समता) रहित अभ्यासभन्दा शास्त्रीय ज्ञान ठूलो हो, योगरहित शास्त्रीय ज्ञानभन्दा ध्यान ठूलो हो र योगरहित ध्यानभन्दा कर्मफलको त्याग गर्ने कुरा ठूलो हो, किनकि त्यागबाट तत्काल परमशान्ति प्राप्त हुन्छ॥ १२॥

**भगवान्! उपर्युक्त चारै साधनामध्ये कुनै एउटा साधनले हजुरलाई प्राप्त गरेको सिद्ध भक्तको लक्षण कस्तो हुन्छ, अर्थात् उसमा केकस्ता गुण हुन्छन्?**

उसको कुनै पनि प्राणीका साथमा द्वेष हुँदैन। त्यति मात्रै होइन, उसको सम्पूर्ण प्राणीहरूका साथमा मित्रता (प्रेम) र सबैप्रति करुणा (दयालुता) रहन्छ। ऊ अहंता र ममतारहित, क्षमाशील तथा सुखदुःखको प्राप्तिमा सम रहन्छ। ऊ हरेक परिस्थितिमा सन्तुष्ट रहन्छ। शरीर, इन्द्रिय, मन आदि उसको वशमा हुन्छन्। उसका मन, बुद्धि ममा नै अर्पित हुन्छन्। यस्तो दृढनिश्चयी भक्त मेरालागि प्रिय छ॥ १३—१४॥

**अरु को हजुरको प्रिय हुन्छ नि?**

जुन भक्तसित अरुलाई उद्वेग हुँदैन र जसलाई अरुसित पनि उद्वेग हुँदैन, यस्तो हर्ष, ईर्ष्या, भय र उद्वेगरहित भक्त मेरालागि प्रिय छ॥ १५॥

**अरु को हजुरको प्रिय छ, प्रभो?**

जसले आफ्नालागि कुनै पनि वस्तु, व्यक्ति आदिको आवश्यकता राख्दैन, जो भित्र र बाहिर पवित्र छ, जो दक्ष (चतुर) छ अर्थात् जसका लागि मनुष्य शरीर प्राप्त भएको छ, त्यो काम (भगवान्लाई प्राप्त गर्ने) उसले गरेको छ, जो संसारदेखि उपराम छ, जसको हृदयमा हलचल छैन, जो भोग र सङ्ग्रहका लागि गरिने सम्पूर्ण कर्महरूको सर्वथा त्यागी छ, त्यस्तो भक्त मलाई प्रिय छ॥ १६॥

**त्यस्तै अरु......?**

जो न त अनुकूलता हुँदा हर्षित हुन्छ, न प्रतिकूलतामा द्वेष गर्दछ, जसले न दुःखदायी परिस्थिति आउँदा शोक गर्दछ, न त सुखदायी परिस्थितिको इच्छा नै गर्दछ र जसले शुभ—अशुभ कर्महरूप्रतिको राग र द्वेषलाई त्यागेको छ, यस्तो भक्त मलाई प्रिय छ॥ १७॥

**अरु कस्ता भक्त प्रिय छन्, प्रभो?**

जसले शत्रु—मित्र, मान—अपमान, अनुकूलता—प्रतिकूलता र सुखदु:खमा समता कामय गर्छ र संसारको आसक्तिबाट रहित छ, जसले निन्दा र स्तुतिलाई उस्तै ठान्दछ, जो मननशील छ, जो जुनसुकै तरिकाले शरीरलाई निर्वाह गर्नका लागि सन्तुष्ट छ, जो बस्ने ठाउँ एवम् शरीरमा पनि ममता र आसक्तिले रहित छ र जो स्थिर बुद्धि भएको छ, यस्तो भक्त मलाई प्रिय छ*॥ १८—१९॥

**यतिन्जेल त हजुरले आफ्नो सिद्ध भक्त प्रिय रहेको बताउनुभयो, अब हजुरलाई अति नै प्रिय को छ? त्यो बताउनुस्।**

जो श्रद्धा—प्रेमसाथ मेरै परायण भएका छन् र भर्खरै बताइएका सिद्ध भक्तहरूका लक्षणको सेवन गरेका छन्, त्यस्ता साधक भक्त मलाई अत्यन्त प्रिय छन्॥ २०॥

---

* यहाँसम्म पाँच प्रकारका सिद्ध भक्तका लक्षणको वर्ण भयो। पाँचौँ प्रकारका भक्तका फरक फरक लक्षण बताउनुको कारण भक्तहरूको स्वभाव, तिनको साधन पद्धति अलग अलग हुन्छन् भन्नु हो। यसर्थ, कुनै भक्तमा मुख्यरूपले कुनै लक्षण हुन्छ भने कुनै भक्तमा कुनै अर्को लक्षण हुन्छ, तर संसारको सम्बन्धको त्याग र भगवान्मा प्रेम भने सबैको उस्तै हुन्छ।

॥ श्रीपरमात्मने नमः ॥

# तेह्रौँ अध्याय

**जसले हजुरको ( सगुण—साकाररूप ) उपासना गर्दछन्, ती त हजुरका अत्यन्त प्रिय छन्, अब यो बताउनुस् कि जसले हजुरको निर्गुण निराकार रूपको उपासना गर्दछन्, ती कस्ता हुन्छन् ?**

बाबु! ती विवेकी हुन्छन्।

**विवेक कसको हुन्छ, भगवान् ?**

क्षेत्र र क्षेत्रज्ञको। हे कुन्तीपुत्र अर्जुन! 'यो' रूपले भनिने शरीरलाई 'क्षेत्र' भनिन्छ भने जसले यो क्षेत्रलाई जान्दछ, त्यसलाई ज्ञानीहरूले 'क्षेत्रज्ञ'(शरीरी) भन्दछन्॥ १ ॥

**त्यस क्षेत्रज्ञको स्वरूप कस्तो हुन्छ ?**

हे भारत! सम्पूर्ण क्षेत्रहरू (शरीरहरू) क्षेत्रज्ञ (शरीरी) रूपमा म नै छु भन्ने जान।*

---

* यहाँ सम्पूर्ण क्षेत्रहरूमा क्षेत्रज्ञ मलाई जान भन्नुको तात्पर्य के हो भने यो शरीर त प्रकृतिको अंश हो, यसर्थ तिमी यसबाट सर्वथा विमुख होऊ र तिमी त मेरा अंश हौ, यसर्थ तिमी सर्वथा मेरो अगाडि आऊ। अर्को अर्थ के हो भने तिमीले जहाँ क्षेत्र (शरीर) का साथमा आफ्नो एकता स्वीकार गरेका छौ, त्यहाँ मसित आफ्नो एकता स्वीकार गर, किनकि वास्तवमा तिम्रो शरीरका साथमा एकता छँदै छैन भने मसित तिम्रो स्वतःसिद्ध एकता छ। यसलाई तिमीले जान।

**त्यो जान्नु भनेको के हो भगवान्?**

क्षेत्र अलग हो र क्षेत्रज्ञ अलग हो भन्ने राम्ररी जान्नु नै मेरो विचारमा ज्ञान हो, अर्थात्, क्षेत्रको संसारका साथमा एकता छ भने क्षेत्रज्ञको मेरो साथमा एकता छ भन्ने कुरालाई राम्ररी अनुभव गर्नु नै मेरो विचारमा ज्ञान हो॥ २॥

**क्षेत्र र क्षेत्रज्ञको ज्ञानका लागि कुन कुरा जान्न आवश्यक हुन्छ?**

छ वटा कुरा जान्नुपर्दछ—क्षेत्रको विषयमा चार र क्षेत्रज्ञका विषयमा दुई। त्यो 'क्षेत्र' जुन छ, जस्तो छ, जुन विकार भएको छ र जेबाट उत्पन्न भएको छ, अर्थात् त्यो क्षेत्रज्ञ जो छ, अथवा जुन प्रभावले युक्त छ, त्यसलाई तिमीले सङ्क्षेपमा मबाट सुन॥ ३॥

**त्यसोभए यसको सविस्तार वर्णन कहाँ भएको छ, भगवान्?**

ऋषिहरूले, वेदका ऋचाहरूले र युक्ति युक्त तथा निश्चित गरिएका ब्रह्मसूत्रका पदहरूले यसलाई विस्तारपूर्वक फरक फरक बताएका छन्॥ ४॥

**त्यो क्षेत्र के हो?**

मूल प्रकृति, समष्टि बुद्धि (महत्तत्त्व), समष्टि अहंकार, पाँच महाभूत, दस इन्द्रियहरू, एक मन र इन्द्रियका पाँच विषय—यी चौबीस तत्त्व भएको क्षेत्र हो*॥ ५॥

---

*मूल प्रकृति सबैको आमा हो। त्यही प्रकृतिबाट बुद्धिरूपी पुत्री पैदा भई। बुद्धिबाट अहंकाररूपी पुत्र पैदा भयो। अहंकारका सन्तान भए—पृथ्वी, जल, तेज, वायु र आकाश गरी पाँच महाभूत। पाँच महाभूतका सन्तान भए—दस इन्द्रियहरू, एक मन र शब्द, स्पर्श, रूप, रस र गन्ध, यी पाँच विषय। इन्द्रिय, मन, र पाँच विषयबाट कुनै पनि सन्तान पैदा भएनन्, तसर्थ, ती विकृति हुन्। अर्थात्, प्रथम सात प्रकृति—विकृति हुन् भने बाँकी सोह्र विकृति हुन्।

**त्यो क्षेत्र कस्ता विकारसहितको छ?**

इच्छा, द्वेष, सुख, दुःख, शरीर, प्राणशक्ति र धारणशक्ति— यी सात विकारहरूपहित यो क्षेत्र मैले सङ्क्षेपमा भनें॥ ६॥

**विकारहरूपहित क्षेत्र 'यो' रूपले (आफूदेखि अलग) कसरी देखिन्छ, भगवान्?**

१–आफूमा श्रेष्ठताको अभिमानको अभाव।

२–आफूमा देखावटीपन नहुनु।

३–शरीर, मन र वाणीले कसैलाई अलिकति मात्र पनि दुःख नदिनु।

४–क्षमाको भाव।

५–शरीर, मन र वाणीमा सरलता।

६–ज्ञानप्राप्तिका लागि गुरुकहाँ गएर उनको सेवा आदि गर्नु।

७–शरीर र अन्तःकरणको शुद्धि।

८–आफ्नो लक्ष्यबाट विचलित नहुनु।

९–मनलाई वशमा गर्नु।

१०–इन्द्रियहरूका विषयमा वैराग्य हुनु।

११–अहङ्काररहित हुनु।

१२–वैराग्यका लागि जन्म, मृत्यु, वृद्धावस्था र रोगहरूमा दोषहरूको मूल कारणलाई देख्नु।

१३–आसक्तिरहित हुनु।

१४–स्त्री, पुत्र, घर आदिमा तल्लीन नहुनु।

१५–अनुकूलता—प्रतिकूलताको प्राप्तिमा चित्त सधैँ समान रहनु।

१६–संसारबाट उपरति र ममा अव्यभिचारिणी भक्ति हुनु।

१७–एकान्तमा रहने स्वभाव हुनु।

१८–जनसमुदायप्रति प्रेम नहुनु।

१९–परमात्माको सत्ताको नित्यनिरन्तर मनन गर्नु।

२०–सबैतिर परमात्मालाई नै देख्नु।

यी बीस साधनाबाट शरीर 'यो' रूपले देखिन थाल्ने छ। शरीरलाई 'यो' रूपले (आफूबाट अलग) देख्नु ज्ञान हो भने यसविपरीत शरीरलाई आफ्नो स्वरूप देख्नु अज्ञान हो॥ ७—११॥

**यस ज्ञानबाट प्राप्त हुने तत्त्व के हो?**

ज्ञेय—तत्त्व (परमात्मा) हो। मैले त्यस ज्ञेय तत्त्वको वर्णन गर्ने छु, जसलाई जान्नाले अमरता प्राप्त हुन्छ।

**त्यस ज्ञेय—तत्त्वको स्वरूप कस्तो हुन्छ?**

त्यो आदिअन्तरहित परम ब्रह्म हो। त्यसलाई न सत् भनिन्छ, न असत् नै भन्न सकिन्छ*॥ १२॥

**तैपनि त्यो कस्तो छ भगवान्?**

त्यो सबैतिर हातखुट्टा भएको, सबैतिर आँखा, टाउको र मुख भएको र सबैतिर कान भएको छ। ऊ सबैलाई व्याप्त तुल्याएर स्थित छ। ऊ सम्पूर्ण इन्द्रियहरूले रहित छ भने सम्पूर्ण इन्द्रियका विषयलाई प्रकाशित गर्ने खालको छ। ऊ आसक्तिरहित छ र सम्पूर्ण संसारको भरणपोषण गर्नेवाला हो। ऊ गुणहरूले रहित छ भने गुणहरूको भोक्ता हो॥ १३–१४॥

---

* त्यस तत्त्वलाई सत्—असत् भन्न सकिँदैन, किनकि असत्को भाव(सत्ता) विना 'सत्' शब्दको प्रयोग हुँदैन, जब कि असत्को अत्यन्त अभाव छ। अतः त्यस परमात्मालाई 'सत्' पनि भन्न सकिँदैन। त्यस परमात्मातत्त्वको कहिल्यै अभाव हुँदैन, यसैले त्यसलाई 'असत्' पनि भन्न सकिन्न। यसको अर्थ के भने त्यस तत्त्वमा सत्—असत् शब्दहरूको अर्थात् वाणीको प्रवृत्ति हुँदै हुँदैन। यस्तो त्यो निरपेक्ष परमात्मातत्त्व छ।

**एउटै तत्त्वमा दुई विरोधी लक्षण कसरी भए?**

अनेक विरोधीभाव त्यही एकमै समाहित हुन्छन्, त्यसमा विरोध हुँदैन, किनकि स्थावर—जङ्गम आदि सम्पूर्ण प्राणीबाहिर पनि त्यही छ, भित्र पनि त्यही छ भने चर—अचर प्राणीहरूको रूपमा पनि त्यही छ अर्थात् ऊबाहेक अर्को कुनै सत्ता छैन। टाढाभन्दा टाढा पनि त्यही छ र नजिकभन्दा नजिक पनि उही छ*। त्यो अत्यन्त सूक्ष्म हुनाले अविज्ञेय छ र अन्तःकरण एवम् इन्द्रियहरूको विषय होइन। यसर्थ, त्यसमा विरोध छैन॥ १५ ॥

**त्यसमा विरोध नहुने कारण के हो भगवान्?**

त्यो परमात्मा विभागरहित भएर पनि अनेक विभाग भएका प्राणीहरू (वस्तुहरू) मा विभक्त जस्तै भएर रहेको छ। त्यही परमात्मा नै सम्पूर्ण प्राणीहरूलाई उत्पन्न गर्ने, तिनको भरणपोषण गर्ने र संहार गर्नेवाला हो, अर्थात् उत्पत्ति, स्थिति र प्रलयरूप पनि उही हो। त्यस परमात्मालाई जान्नुपर्दछ॥ १६ ॥

**त्यसको स्वरूप के हो?**

इन्द्रिय, मन, बुद्धि आदिद्वारा जति ज्ञान हुन्छन्, ती सबै

---

* टाढा र नजिक तीन प्रकारले हुन्छ—देशकृत, कालकृत र वस्तुकृत। देशलाई लिएर—टाढाभन्दा टाढा देशमा पनि उही छ र नजिकभन्दा नजिक देशमा पनि उही छ। काललाई लिएर—पहिलाभन्दा पहिला पनि उही थियो, पछिभन्दा पछि पनि उही रहने छ र अहिले पनि उही छ। वस्तुलाई लिएर—सम्पूर्ण वस्तुहरूमा पहिले पनि उही हो, वस्तुको अन्तमा पनि उही छ र वस्तुको रूपमा पनि उही छ। यसर्थ, ऊ टाढाभन्दा टाढा र नजिकभन्दा नजिक छ।

यो श्लोक यस प्रकरणको सार हो। यस श्लोकको विषयलाई ठीक तरिकाले बुझेपछि र यसको भावलाई मनन गरेपछि मनुष्य चाहे व्यवहारमा रहोस्, चाहे एकान्तमा रहोस्, यस भावको जागृति उसमा स्वतः (विनाश्रम, विनाउद्योग) हुन्छ।

उसैबाट प्रकाशित हुन्छन्। यसर्थ, ऊ सम्पूर्ण ज्योतिहरूको(ज्ञानको) पनि ज्योति(प्रकाश) हो। उसमा अज्ञानको अत्यन्त अभाव छ। ऊ ज्ञानस्वरूप हो। जान्न योग्य पनि उही छ। ऊ ज्ञानले प्राप्त गर्न योग्य छ। ऊ सबैका हृदयमा विराजमान छ*॥ १७॥

**अरु ककसलाई जान्नु छ र जान्नुको महत्त्व के छ, भगवान्?**

क्षेत्र, ज्ञेय र अज्ञेय—यी तीनलाई जान्नु छ, जसको वर्णन मैले छोटकरीमा गरिदिएँ। यी तीनलाई राम्ररी जान्ने मेरो भक्तले मेरो भावलाई प्राप्त गर्दछ, अर्थात् उसलाई मसित अभिन्नताको अनुभव हुन्छ॥१८॥

**भक्त त क्षेत्र, ज्ञान र ज्ञेय—यी तीनलाई जानेर हजुरसित अभिन्नताको अनुभव गर्दछ, तर जुन साधक केवल ज्ञानमार्गमा हिँड्न चाहन्छ, उसका लागि के जान्न आवश्यक छ?**

उसका लागि प्रकृति(क्षेत्र) र पुरूष(क्षेत्रज्ञ)—यी दुईलाई फरक फरक जान्नु आवश्यक छ। प्रकृति र पुरुष यी दुवै अनादि हुन्।

**यदि यी दुवै अनादि हुन् भने यी गुण र विकार कसबाट पैदा भए त?**

गुण र विकार प्रकृतिबाट पैदा हुन्छन्। यसबाहेक कार्य, कारण र कर्तापनमा पनि प्रकृति नै कारण हुन्छ।

**पुरूष चाहिँ केमा कारण हुन्छ, प्रभो?**

पुरूष त सुखदुःखको भोक्तापनमा कारण हुन्छ॥१९-२०॥

**पुरुष भोक्तापनमा हेतु कहिले बन्छ नि?**

* यस अध्यायको तेह्रौँ श्लोकमा विराट्‌रूपको र यस श्लोकमा ज्योतिस्वरूप प्रकाशस्वरूप परमात्माको वर्णन छ।

प्रकृतिमा स्थित हुनाले, उससित सम्बन्ध स्वीकार्नाले नै पुरूष गुणहरूको भोक्ता बन्दछ भने गुणहरूको सङ्गत हुनाले नै ऊ उचनिज योनिहरूमा जन्मन्छ॥ २१ ॥

**त्यस पुरूषको स्वरूप कस्तो हुन्छ, भगवान्?**

त्यो पुरूष प्रकृतिको कार्य शरीरसित सम्बन्ध राख्नाले 'उपद्रष्टा', त्यससित मिलेर सल्लाह दिनाले 'अनुमन्ता', आफूलाई त्यसको भरणपोषण गर्नेवाला मान्नाले 'भर्ता', उसको सङ्गतले सुखदुःख भोग्नाले 'भोक्ता' र आफूलाई त्यसको मालिक मान्नाले 'महेश्वर' बन्दछ। तर, स्वरूपले त्यो पुरूष 'परमात्मा' मानिन्छ। ऊ यस शरीरमा रहेर पनि वास्तवमा शरीरको सम्बन्धबाट मुक्त हुन्छ॥ २२ ॥

**यसप्रकार प्रकृति र पुरूषको स्वरूपलाई जान्नाले के हुन्छ?**

यसप्रकारले गुणहरूपहित प्रकृतिलाई र गुणरहित पुरूषलाई जसले ठीक—ठीक तरिकाले जान्दछ, उसको सम्पूर्ण किसिमले शास्त्रविहित व्यवहार(कर्तव्यकर्म) गर्दागर्दै पनि फेरि जन्म हुँदैन, अर्थात् ऊ जन्ममरणबाट मुक्त हुन्छ॥ २३ ॥

**त्यस पुरूषलाई जान्ने अर्को पनि उपाय छ र?**

छ नि। कति मानिसले ध्यानयोगद्वारा, कतिले साङ्ख्य-योगद्वारा र कतिले कर्मयोगद्वारा आफैँभित्र आफ्नो स्वरूपलाई जान्दछन्॥ २४ ॥

**अरु पनि कुनै सरल उपाय छन् कि?**

अवश्य छन्। जसले ध्यानयोग, साङ्ख्ययोग आदि साधनाहरूलाई जान्दैनन्, केवल जीवन्मुक्त महापुरुषहरूका आज्ञाको अनुयायी बन्दछन्, उनीहरू नै मृत्युबाट पार हुन्छन्, अर्थात् मुक्त हुन्छन्॥ २५ ॥

**उनीहरू मृत्युबाट कसरी पार हुन्छन्?**

हे भतरवंशीहरूमा श्रेष्ठ अर्जुन! स्थावर र जङ्गम जति पनि प्राणीहरू जन्मन्छन्, ती सबै क्षेत्र र क्षेत्रज्ञका मानिएका संयोगबाटै जन्मन्छन् भन्ने तिमीले मान। यसर्थ, क्षेत्रका साथमा आफ्नो संयोग नमान्नाले ती तर्दछन्, जन्म—मरणबाट मुक्त हुन्छन्॥ २६॥

**यस संयोगबाट छुट्नका लागि मनुष्यले के गर्नुपर्दछ?**

दुईटा कुरा गर्नुपर्दछ— स्वतः सिद्ध परमात्माको सम्बन्धलाई पहिचान गर्नु र प्रकृति (शरीर) बाट सम्बन्ध तोड्नु। यो विषम संसारमा जो समरूपले स्थित छ, नष्ट हुनेहरूमा जो अविनाशीरूपले रहेको छ अथवा जो परम ईश्वर हो, त्यस्तो आफ्नो परम स्वरूपलाई देख्दछ, उसले नै वास्तवमा ठीक देख्दछ, अर्थात् उसलाई वास्तविक स्वरूपको अनुभव हुन्छ। सबैतिर समानरूपले परिपूर्ण परमात्मासित एकता हुनाले शरीरसित तादात्म्यको अभाव हुन्छ। उसले फेरि आफूले आफ्नो हत्या गर्दैन, अर्थात् शरीर मर्दा पनि आफू मर्छु भन्ने ठान्दैन। यसर्थ, उसले परमगति (परमात्मा) लाई प्राप्त गर्दछ॥ २७–२८॥

**हजुरले परमात्माको सम्बन्धलाई थाहा पाउने कुरा त भन्नुभयो, अब प्रकृति (शरीर) सित सम्बन्ध कसरी तोड्ने, त्यो कुरा बताइदिनुस्।**

सबै क्रियाहरू प्रकृतिद्वारा नै हुन्छन् भन्ने ठीक बोध भएपछि उसले आफूमा कर्तृत्वको अभाव अनुभव गर्दछ भने जुन समयमा उसले सम्पूर्ण प्राणीहरूका फरक फरक भाव (शरीर) लाई एक प्रकृतिमा नै स्थित र प्रकृतिबाटै उत्पन्न देख्दछ, त्यससमयमा

उसले ब्रह्मलाई प्राप्त गर्दछ। त्यसपछि प्रकृतिसित उसको सम्बन्ध रहँदैन॥ २९-३०॥

**यस्तो किन हुन्छ नि?**

हे कुन्तीनन्दन! यो पुरूष स्वयम् अनादि र गुणरहित हुनाले स्वयम् अविनाशी परमात्मास्वरूप नै हो। यसले शरीरमा रहँदा पनि वास्तवमा न त कर्म गर्दछ, न लिप्त नै हुन्छ, अर्थात् यो कर्ता र भोक्ता होइन॥ ३१॥

**यो लिप्त किन हुँदैन त?**

जसरी आकाश सर्वत्र व्याप्त भएर पनि अत्यन्त सूक्ष्म हुनाले कुनै वस्तु, व्यक्ति आदिमा कहिल्यै लिप्त हुँदैन, त्यसैगरी यो पुरूष पनि सबैतिर परिपूर्ण हुँदाहुँदै पनि कुनै पनि शरीरमा अलिकति पनि लिप्त हुँदैन॥ ३२॥

**यो पुरूष कसरी कर्ता बन्दैन, प्रभो?**

हे भारत! जसरी एउटै सूर्यले सम्पूर्ण विश्वलाई प्रकाशित गर्दछ, तर उसमा प्रकाशित गर्ने कर्तृत्व आउँदैन, त्यसैगरी यो क्षेत्रज्ञले पनि सम्पूर्ण क्षेत्रलाई प्रकाशित गर्दछ, तर उसमा कर्तृत्व आउँदैन, प्रकाशक मात्रै रहन्छ। यसैगरी, जसले ज्ञानरूपी आँखाले क्षेत्र र क्षेत्रज्ञका भेदलाई तथा प्रकृति र उसको कार्यबाट आफूलाई फरक अनुभव गर्दछन्, तिनले परमात्मालाई प्राप्त गर्दछन्॥ ३३—३४॥

॥ श्रीपरमात्मने नमः ॥

# चौधौँ अध्याय

भगवान्ले भन्नुभयो—जसलाई जानेर सारा मननशील मानिसले परिमसिद्धिलाई प्राप्त गरे, सम्पूर्ण ज्ञानहरूमा पनि उत्तम र परम ज्ञान म फेरि बताउँछु॥ १ ॥

**त्यस ज्ञानको थप महिमा के छ, प्रभो?**

त्यस ज्ञानको आश्रय लिएर जसले मेरो सधर्मतालाई प्राप्त गरेका छन्, अर्थात् मजस्तै भएका छन्, ती महासर्गमा पनि जन्मँदैनन् र महाप्रलयमा पनि व्यथित हुँदैनन्॥ २ ॥

**महासर्गमा प्राणी कसरी उत्पन्न हुन्छ र?**

हे भारत! मेरो मूल प्रकृति त उत्पत्ति स्थान हो भने मैले त्यहाँ जीव(चेतन)रूपी गर्भ स्थापना गर्दछु, जसमा सम्पूर्ण प्राणी पैदा हुन्छन्। अतः हे कौन्तेय! अलग अलग योनिहरूमा जेजति प्राणी उत्पन्न हुन्छन्, ती सबैको उत्पत्तिमा माताको स्थानमा मेरो मूल प्रकृति हुन्छ र बीज—स्थापना गर्दा पिताका स्थानमा म हुन्छु*॥ ३–४ ॥

**यदि हजुर सबै जीवका पिता हुनुहुन्छ भने ती जीव किन बन्धनमा पर्छन् त?**

---

* महासर्गको सुरुआतमा जीवको (आ–आफ्ना गुण, कर्म र स्वभाव अनुसार) प्रकृतिका साथमा विशेष सम्बन्ध गराइदिनु नै भगवान्द्वारा बीज–स्थापना गर्नु हो।

मानिस मनुष्ययोनिमा जन्मन्छ भने तमोगुण बढेका बेला मर्ने मानिस पशु, पक्षी आदि मूढयोनिहरूमा जन्मन पुग्दछ॥ १४-१५॥

**यी गुणहरूबाट यस्ता गतिहरू किन हुन्छन्, भगवान्?**

किनभने वृत्तिहरू जस्ता हुन्छन्, त्यस्तै कर्म हुन्छन्। यसर्थ, सात्त्विक कर्मको फल निर्मल हुन्छ, राजस कर्मको फल दुःख हुन्छ भने तामस कर्मको फल अज्ञान (मूढता) हुन्छ। अर्थात्, जसरी सात्त्विक आदि वृत्तिहरूको फल हुन्छ, त्यसरी नै सात्त्विक आदि कर्महरूको पनि फल हुन्छ॥ १६॥

**वृत्ति र कर्महरूको केन्द्रमा के छ नि?**

तीनै गुणहरू छन्। सत्त्वगुणले ज्ञान पैदा हुन्छ, रजोगुणबाट लोभ पैदा हुन्छ भने तमोगुणबाट प्रमाद, मोह र अज्ञान पैदा हुन्छ॥ १७॥

**यी तीनै गुणहरूमा स्थित रहनेहरूको गति के हुन्छ, भगवान्?**

सत्त्वगुणमा स्थित रहनेहरू स्वर्गादि उच्च लोकमा जान्छन्, रजोगुणमा स्थित रहनेहरूको मनुष्यलोकमा जन्म हुन्छ भने निन्दनीय तमोगुणमा स्थित हुनेहरू नर्क आदिमा जान्छन्॥ १८॥

**त्यसोभए हजुरलाई कसले प्राप्त गर्दछ त?**

जसले कर्म हुनुमा गुणभन्दा अन्यलाई कर्ता देख्दैन र आफूलाई गुणहरूभन्दा पर अनुभव गर्दछ, उसले मेरो स्वरूपलाई प्राप्त गर्दछ भने त्यो विवेकी मनुष्यले देहलाई उत्पन्न गर्ने यी तीनै गुणहरूलाई अतिक्रमण गरी जन्म, मृत्यु र वृद्धावस्थारूपी दुःखहरूबाट मुक्त भएर अमरतालाई अनुभव गर्दछ॥ १९—२०॥

**अर्जुनले भने—यी तीनै गुणहरूबाट मुक्त भएको मानिस कस्ता लक्षणले युक्त भएको हुन्छ, प्रभो?**

भगवान्‌ले भन्नुभयो—हे पाण्डव! सत्त्वगुणको 'प्रकाश', रजोगुणको 'प्रवृत्ति' र तमोगुणमा 'मोह'—यी तीनै वृत्तिहरू आउँदा पनि ऊ यिनीहरूसित द्वेष गर्दैन र यी नआउँदा पनि इच्छा गर्दैन, जो उदासीनजस्तै रहन्छ, गुणहरूले विचलित हुँदैन र गुणैगुणहरूबाट गुज्रिइरहेको छ भन्ने अनुभव गर्दै आफ्नै स्वरूपमा स्थित रहन्छ र स्वयम् चेष्टारहित हुन्छ।

**गुणातीत मनुष्यका आचरणहरू कस्ता हुन्छन्, भगवान्?**

उसका आचरणहरू समतापूर्ण हुन्छन्। जुन धैर्यवान् मानिस आफ्नो स्वरूपमा निरन्तर स्थित रहन्छ तथा दुःखसुखमा, माटोको डल्लो, ढुङ्गा र सुनमा, इन्द्रिय आदिका प्रिय—अप्रियमा, नामको निन्दा—स्तुतिमा, शरीरको मान—अपमानमा, शत्रु—मित्रको पक्षमा समान रहन्छ र जसले कामना—आसक्तिलाई लिएर कुनै नयाँ कर्म आरम्भ गर्दैन, ऊ गुणातीत मानिन्छ।

**गुणातीत हुने उपाय के छ?**

जसले अव्यभिचार (अनन्य) भक्तियोगले मेरै भजन गर्दछ, उसले यी तीनै गुणहरूलाई अतिक्रमण गरेर ब्रह्मप्राप्तिको पात्र बन्न पुग्दछ॥ २१—२६॥

**भक्ति हजुरको गरोस्, तर पात्र भने ब्रह्मप्राप्तिको होस्, यस्तो कसरी नि भगवान्?**

बाबु, ब्रह्मा, अविनाशी अमृत, सनातनधर्म र ऐकान्तिक सुखको आश्रय म नै हुँ, अर्थात् यी सबै मेरै नाम हुन्॥ २७॥

॥ श्रीपरमात्मने नमः ॥

# पन्ध्रौँ अध्याय

**ब्रह्मा, अविनाशी अमृत आदिका आधार (आश्रय) हजुर हुनुहुन्छ भने यस संसारको आधार के हो त भगवान्?**

भगवान्‌ले भन्नुभयो—यस संसाररूपी वृक्षको आधार, आश्रय म नै हुँ। यो वृक्ष माथितिर जरो र तलतिर हाँगा भएको हुन्छ। भोलिसम्म पनि स्थिर नरहने हुँदा यसलाई 'अस्वत्थ' भनिन्छ। यसको आदि र अन्तको मेसो नहुनाले र प्रवाहरूले नित्य रहनाले यसलाई 'अव्यय' भनेर भनिन्छ। वेदमा आएका सकाम अनुष्ठानहरूको वर्णनलाई यसका पात मानिएको छ। यस्तो संसार—वृक्षलाई जसले यथार्थरूपले जान्दछ, उसैले वास्तवमा वेदका तत्त्वलाई जान्दछ॥ १ ॥

**यो संसार—वृक्ष अरू कस्तो छ, भगवान्?**

यस संसाररूपी वृक्षका सत्त्व, रज र तम—यी तीनै गुणहरूले बढेका हाँगा तल, बीचमा र माथिमा सबै लोकमा फैलिएका छन्। शब्द, स्पर्श, रूप, रस र गन्ध—यी पाँच विषय यस वृक्षको हाँगाका कोपिला(यी विषयको चिन्तन गर्नु नयाँनयाँ कोपिला निस्कनु हो) हुन्। तर, यस वृक्षका हाँगाहरूको जरो भने यही मनुष्यलोक नै हो, किनकि यस मनुष्यलोकमा गरिएका कर्मका फल नै सबै लोकहरूमा भोगिन्छ॥ २ ॥

**यस वृक्षको स्वरूप कस्तो छ त?**

यस संसार—वृक्षको जस्तो सत्य र सुन्दर—सुखदायी रूप मानिसहरूले देख्न सक्दछन्, त्यस्तो रूप विचार गर्दा देखिँदैन, यसको न त आदि छ, न त अन्त छ र न स्थिति नै छ।

**त्यसोभए यिनीहरूसित सम्बन्ध तोड्नको लागि मानिसले के गर्नुपर्दछ त?**

तादात्म्य, ममता र कामनारूपी शाखाहरूको सुदृढ जरो भएको संसारवृक्षलाई असङ्गतारूपी शास्त्रले काटेर त्यस परमपद परमात्माको खोजी गर्नुपर्दछ।

**यदि खोजी गर्न सकिएन भने के गर्नुपर्दछ, भगवान्?**

जसलाई पाएपछि मानिस फेरि फर्किएर संसारमा आउँदैन र जसबाट अनादिकालदेखि नै यो सृष्टि फैलिएको छ, त्यस आदिपुरूष परमात्माको शरण पर्नुपर्दछ॥ ३–४॥

**शरण पर्दा के हुन्छ र?**

शरण पर्ने मानिस मान र मोहबाट मुक्त हुन्छन्, आसक्ति नरहने भएकाले उनीहरूमा ममता आदि दोष रहँदैनन्, उनीहरू नित्य निरन्तर परमात्मामा नै स्थित रहन्छन्, ती सम्पूर्ण कामनाहरूले मुक्त हुन्छन्, उनीहरू सुखदुःखरूपी द्वन्द्वहरूबाट मुक्त भएर अविनाशी पदलाई प्राप्त गर्दछन्॥ ५॥

**त्यो अविनाशी पद कस्तो छ भगवान्?**

सूर्य, चन्द्रमा र अग्निले जसलाई प्रकाशित गर्न सक्दैनन् र जहाँ गएपछि मानिस फर्किएर संसारमा आउँदैन, त्यो अविनाशी पद नै मेरो परमधाम हो॥ ६॥

**फर्किएर संसारमा नआउनुको कारण चाहिँ?**

यस शरीरमा जीव बनेको यो आत्मा(जीवात्मा) सधैँ मेरै अंश हो, यसैले मलाई प्राप्त गरिसकेपछि फेरि फर्किएर संसारमा आउँदैन। तर, यसबाट के भूल हुन्छ भने यसले प्रकृतिका कार्य, इन्द्रिय र मनलाई आफ्नो ठान्दछ॥ ७॥

**इन्द्रिय आदिलाई आफ्ना मान्दा के हुन्छ र?**

वायुले जसरी गन्धको ठाउँबाट गन्धलाई नै ग्रहण गरेर लैजान्छ, त्यसैगरी शरीर, इन्द्रिय आदिको मालिक बनेको जीवात्माले पनि जुन शरीरलाई छोड्छ, त्यहाँबाट मनसहित इन्द्रियलाई ग्रहण गरेर फेरि जुन शरीर पाउँछ, त्यसमै जान्छ, अर्थात् जन्मने र मर्ने गरिरहन्छ॥ ८॥

**उसले त्यहाँ के गर्दछ, भगवान्?**

त्यहाँ उसले मनको आश्रय लिएर श्रोत्र, त्वचा, चक्षु, रसना र नासिका—यी पाँच इन्द्रियद्वारा शब्द, स्पर्श, रूप, रस र गन्ध—यी पाँच विषयहरूलाई रागपूर्वक सेवन गर्दछ॥ ९॥

**रागसहित विषयसेवन गर्दा के हुन्छ र?**

गुणहरूले युक्त भएर जन्मने, मर्ने र भोगहरूलाई भोग्दै गर्दा पनि यो जीवात्मा स्वरूपसित निर्लिप्त नै रहन्छ भन्ने रागपूर्वक विषयहरूको सेवन गर्ने मूढ मनुष्यले जान्दैनन्।

**त्यसोभए कसले जान्दछन् त?**

ज्ञानरूपी आँखा भएका विवेकी मानिसले मात्रै जान्दछन्॥ १०॥

**ज्ञाननेत्र कसका खुल्छन्, कसका खुल्दैनन्, भगवान्?**

जसले आफ्नो अन्तःकरणलाई शुद्ध बनाएका छन्, अर्थात् नित्यप्राप्तलाई महत्त्व दिएका छन्, यस्ता यत्नशील योगीहरूले आफूमै स्थित तत्त्वलाई जान्दछन्, अर्थात् उनीहरूका त ज्ञाननेत्र

खुलेका हुन्छन्, तर जसले आफ्नो अन्तःकरण शुद्ध बनाएका छैनन्, अर्थात् स्वतः प्राप्त विवेकलाई आदर गरेनन्, त्यस्ता अविवेकी मनुष्यले प्रयास गर्दा पनि यस तत्त्वलाई जान्दैनन्, अर्थात् उनीहरूका ज्ञाननेत्र खुल्दैनन्॥ ११ ॥

**आफैँमा स्थित तत्त्व चाहिँ के हो नि ?**

म नै हुँ। सूर्यमा आएको जुन तेजले सम्पूर्ण जगत्लाई प्रकाशित गर्दछ र जुन तेज चन्द्रमामा छ, अग्निमा छ, त्यसलाई नै तिमीले मेरै तेज ठान, अर्थात् सूर्य, चन्द्र र अग्निमा म नै तेजरूपले स्थित भई सम्पूर्ण संसारलाई प्रकाशित गर्दछु॥ १२ ॥

**हजुरले अरु केके गर्नुहुन्छ, भगवान् ?**

मैले नै पृथ्वीमा प्रवेश गरेर आफ्नो शक्तिले सम्पूर्ण प्राणीहरूलाई धारण गर्दछु भने मैले नै रसमय चन्द्रमा भएर सम्पूर्ण वनस्पतिलाई पुष्ट गर्दछु॥ १३ ॥

**त्यस्तै अरु केके गर्नुहुन्छ, प्रभो ?**

प्राणीहरूको शरीरमा रहने मैले नै प्राण—अपानले युक्त वैश्वानर (जठराग्नि) बनेर प्राणीहरूले खाएका चार किसिमका (भोज्य, पेय, चोष्य र लेह्य) अन्नलाई पचाउँछु॥ १४ ॥

**हजुरका त्यस्तै अन्य विलक्षणता ?**

म नै सबैका हृदयमा रहन्छु। मबाट नै स्मृति, ज्ञान र अपोहन(संशय आदि दोषहरूको नाश) हुन्छ। सम्पूर्ण वेदहरूद्वारा नै मलाई जान्न सकिन्छ। वेदका तत्त्वको निर्णय गर्ने र वेदहरूलाई जान्ने पनि म नै हुँ॥ १५ ॥

**हजुर जसका हृदयमा विराजमान हुनुहुन्छ, ती सबै को हुन् ?**

यस मनुष्यलोकमा क्षर (विनाशी) र अक्षर (अविनाशी)—

यी दुई प्रकारका पुरूष छन्। यिनीहरूमध्ये सम्पूर्ण प्राणीहरूको शरीरलाई विनाशी र जीवात्मालाई अविनाशी भनिन्छ॥ १६॥

**क्षर र अक्षरबाहेक पनि अरु केही छ?**

छ नि, क्षर र अक्षरभन्दा उत्तम पुरूष हो, जो संसारमा परमात्मा नामले पुकारिएको छ,जो त्रिलोककै भरणपोषण गर्ने अविनाशी ईश्वर हो॥ १७॥

**उत्तम पुरूष त अन्य छन्, तर हजुर को हुनुहुन्छ भगवान्?**

बाबु, त्यो उत्तम पुरूष म नै हुँ। म क्षरभन्दा त पर छु नै, अक्षरभन्दा पनि उत्तम छु। यसर्थ, लोकमा र वेदमा म नै पुरूषोत्तम नामले प्रसिद्ध छु॥ १८॥

**हजुर पुरूषोत्तम नामले प्रसिद्ध भएर मानिसलाई के फाइदा हुन्छ र?**

हे भारत! जुन मोहरहित भक्तले मलाई यसरी पुरूषोत्तम जान्दछ, ऊ सर्वज्ञ हुन्छ, अर्थात् उसका लागि केही पनि जान्न बाँकी रहँदैन। त्यसपछि उसले सबै प्रकारले केवल मेरै भजन गर्दछ, अर्थात् ममा नै लागिरहन्छ॥ १९॥

**यदि कुरा यस्तो हो भने सबै जना हजुरमै किन लाग्दैनन् त नि?**

हे निष्पाप अर्जुन! मैले जुन कुरा तिमीसित भनेको छु, यो अत्यन्त गोप्य कुरा हो। यसलाई जानेर नै मेरो भक्त ज्ञात—ज्ञातव्य, कृतकृत्य र प्राप्त—प्राप्तव्य हुन पुग्दछ॥ २०॥

॥ श्रीपरमात्मने नमः ॥

# सोह्रौँ अध्याय

**त्यस अत्यन्त गोपनीय विषयको अधिकारी को हुन्छ, प्रभो ?**

दैवी सम्पत्ति भएको हुन्छ*।

**दैवी सम्पत्ति भएको मानिसका लक्षण केकस्ता हुन्छन् ?**

भगवान्‌ले भन्नुभयो—यस्ता हुन्छन्—

१–मेरै दृढ भरोसामा निडर रहनु।

२–अन्तःकरणमा मलाई नै प्राप्त गर्ने एक दृढ निश्चय हुनु।

३–मलाई तत्त्वपूर्वक जान्नका लागि हरेक परिस्थितिमा समान रहनु।

४–सात्त्विक दान दिनु।

५–इन्द्रियलाई वशमा गर्नु।

६–आफ्नो कर्तव्यलाई पालन गर्नु।

७–शास्त्रका सिद्धान्तलाई आफ्नो जीवनमा उतार्नु।

८–आफ्नो कर्तव्यको पालन गर्ने समयमा जस्ता कष्ट आउँछन्, तिनलाई प्रसन्नतासाथ सहन गर्नु।

९–तन,मन र वाणीमा सरलता।

१०–तन,मन र वाणीले कुनै पनि प्राणीलाई कहिल्यै अलिकति

---

*‘देव’ नाम परमात्माको हो। त्यस परमात्माका जे सम्पत्ति छन्, गुण छन्, ती ‘दैवी सम्पत्ति’ मानिन्छन्, अर्थात् जुन साधन परमात्मा प्राप्तिमा निमित्त(हेतु) बन्दछन्, ती दैवी सम्पत्ति हुन्।

पनि कष्ट नपुऱ्याउनु।

११-जस्तो देख्यो, सुन्यो र बुझ्यो, त्यस्तै प्रिय शब्दमा भनिदिनु।

१२-मेरो स्वरूप सम्झिएर कसैमाथि पनि कहिल्यै क्रोध नगर्नु।

१३-सांसारिक कामनाहरूको त्याग गर्नु।

१४-अन्तःकरणमा रागद्वेषजनित हलचल नहुनु।

१५-चुक्ली नलाउनु।

१६-सम्पूर्ण प्राणीहरूमाथि दयाको भाव हुनु।

१७-सांसारिक विषयमा नलोभिनु।

१८-हृदय कोमल हुनु।

१९-अकर्तव्य गर्न लाज लाग्नु।

२०-चञ्चलता(उत्ताउलो) नहुनु।

२१-शरीर र वाणीमा तेज (प्रभाव) हुनु।

२२-आफूमा दण्ड दिने सामर्थ्य हुँदा पनि आपराधीको अपराधलाई माफ गर्नु।

२३-हरेक परिस्थितिमा धैर्य राख्नु।

२४-शरीरलाई शुद्ध राख्नु।

२५-बदला लिने भावना नहुनु।

२६-आफूमा श्रेष्ठताको भाव नहुनु।

हे भरतवंशी अर्जुन! यी सबै दैवी सम्पत्तिलाई प्राप्त गरेको मानिसका लक्षण हुन्, अर्थात् यी लक्षण भएकालाई मेरो भक्तिको अधिकारी मान्नुपर्दछ*॥ १—३॥

* यहाँ के शङ्का हुन्छ भने जो यस्तो लक्षण भएका छन्, ती त भक्तिका अधिकारी भए, तर जसमा ती लक्षण छैनन्, ती दुराचारी मनुष्य त भक्तिका अधिकारी हुनै

**को भक्तिको अधिकारी हुँदैन, भगवान्?**

जोसँग आसुरी सम्पत्ति छ*।

**आसुरी सम्पत्ति हुने मानिसका लक्षण केकस्ता हुन्छन्?**

ती यसप्रकारका हुन्छ—

१-दम्भ (देखावटीपन) गर्नु।

२-घमण्ड गर्नु अर्थात् ममतापूर्ण चिजलाई लिएर आफूमा बडप्पनको अनुभव गर्नु।

३-अहंता भएका चिजलाई लिएर अभिमान गर्नु।

४-क्रोध गर्नु।

५-मन, वाणी र व्यवहारमा कठोर हुनु।

६-सत्—असत्, कर्तव्य—अकर्तव्य आदिको ज्ञान (विवेक) लाई महत्त्व नदिनु।

हे पृथानन्दन! यी सबै आसुरी सम्पत्ति प्राप्त गरेका मानिसका लक्षण हुन्, अर्थात् यी लक्षण भएका मानिस प्रायः मेरो भक्तिका अधिकारी हुँदैनन्॥ ४॥

**यो दैवी र आसुरी सम्पत्तिको फल कस्तो हुन्छ, भगवान्?**

दैवी सम्पत्ति मुक्ति प्रदान गर्नेवाला र आसुरी सम्पत्ति बन्धनमा पार्नेवाला हुन्छ। तर, हे पाण्डव! तिमीले शोक गर्नु

---

सक्दैनन्? कुरा त ठीकै हो, तर यदि कुनै दुराचारी मनुष्य पनि अनन्यभावले भगवान्मा लाग्दछ भने ऊ पनि छिटै धर्मात्मा हुन्छ, अर्थात् उसमा भगवत्कृपाले दैवी सम्पत्तिका लक्षण छिटै आउँछन् (गीता ९। ३०-३१)।

* 'असु' नाम प्राणहरूको हो। ती प्राणहरूमा नै जो रमण गर्न चाहन्छन्, प्राणहरूलाई नै राख्न चाहन्छन्, तिनलाई 'असुर' भनिन्छ। अर्थात्, शरीरका साथमा एकता मानेर 'म कहिल्यै नमरूँ, सधैँ बाँची रहूँ र सुख भोगी रहूँ' भन्ने इच्छा भएका मानिस 'असुर' हुन्। ती असुरहरूको जुन सम्पत्ति (लक्षण) छ, त्यो आसुरी सम्पत्ति

पर्दैन, किनकि तिमीले दैवी सम्पत्तिलाई प्राप्त गरेका छौ॥ ५॥

**आसुरी सम्पत्ति बन्धनकारक कसरी हुन्छ नि?**

यस संसारमा दुई किसिमका प्राणीहरूको सिर्जना गरिएको छ—दैवी र आसुरी। दैवी सम्पत्तिलाई त मैले सविस्तार भनें, अब हे पार्थ! तिमीले आसुरी सम्पत्तिलाई विस्तारपूर्वक सुन। आसुरी सम्पत्तिवाला मानिस केमा प्रवृत्त हुनुपर्दछ अथवा पर्दैन भन्ने जान्दैनन् भने तिनमा न त शौचाचार(बाह्य शुद्धि) हुन्छ, न सदाचार(श्रेष्ठ आचरण) हुन्छ, न त सत्यको पालना नै हुन्छ॥ ६-७॥

**उनीहरूमा शौचाचार आदि किन हुँदैन भगवान्?**

उनीहरूको दृष्टि उल्टो हुन्छ। उनीहरूले यही भन्दछन् कि यो संसार असत्य छ, अर्थात् यसका कुनै पनि कुरा(शास्त्र, धर्म आदि) सत्य होइनन्। यस संसारमा धर्म—अधर्म, पाप—पुण्य आदि कुनै पनि मर्यादा छैन। यस संसारलाई रच्ने पनि कुनै ईश्वर छैन, तर स्त्रीलाई पुरूषमा र पुरूषलाई स्त्रीमा चाहना भयो भने संयोगले यो संसार पैदा हुन्छ। यसर्थ, यस संसारको उत्पत्तिको हेतु काम नै हो, यसबाहेक अरु कुनै पनि कारण छैन॥ ८॥

**ती आसुरीवालाहरूका कर्म कस्ता हुन्छन्?**

उपर्युक्त नास्तिक दृष्टिको आश्रय लिने ती मानिसले आफ्नो नित्य स्वरूप (आत्मा) लाई मान्दैनन्, उनीहरूको बुद्धि तुच्छ हुन्छ, उनीहरूका कर्म अत्यन्त उग्र(भयानक) हुन्छन्, ती जगत्का शत्रु हुन्छन्। यस्ता मनुष्यको शक्ति अर्काको नाश गर्नका लागि हुन्छ। ती कहिल्यै पूरा नहुने कामनाहरूको आश्रय लिएर दम्भ, अभिमान र मदमा चूर हुने र अपवित्र नियमहरूलाई धारण गर्ने

मनुष्य मोहका कारण अनेक दुराग्रहलाई समातेर संसारमा विचरण गरिरहन्छन्॥ ९–१०॥

**उनीहरूका भाव कस्ता हुन्छन् नि?**

उनीहरू मृत्युपर्यन्त रहने ठूलाठूला चिन्ताहरूको आश्रय लिन्छन्। उनीहरू पदार्थको भोग र सङ्ग्रह गर्नमै लागिरहने र 'जे छ, त्यो यति (सुखभोग गर्नु र सङ्ग्रह गर्नु) नै हो' भन्ने निश्चय गर्नेहरू हुन्छन्॥ ११॥

**उनीहरू कुन उद्देश्य लिएर हिँड्ने हुन्छन्, भगवान्?**

सयौँ आशाहरूका फाँसीमा बाँधिएका ती मानिस काम र क्रोधका दास भएर केवल भोग गर्ने उद्देश्यले नै अन्यायपूर्वक धनसङ्ग्रह गर्ने चेष्टा गरिरहन्छन्॥ १२॥

**उनीहरूका मनोरथ कस्ता हुन्छन्?**

आज यति धन त प्राप्त भएको छ, अब यो मनको चाहना पूरा गर्छु। यति धन त हामीसित छँदै छ, यति धन अभैद्व हुन्छ। त्यस शत्रुलाई त हामीले मारिदियौँ, अब बाँकी शत्रुलाई पनि हामीले मार्ने छौँ। हामी सर्वसमर्थ छौँ,सिद्ध छौँ, बलवान् छौँ, सुखी छौँ र भोगहरूलाई भोग्नेवाला हौँ। हामी निकै धनी छौँ। धेरै मानिस हामीलाई साथ दिनेवाला छन्। हामीजस्तो अर्को को हुन सक्छ? हामीले खूब यज्ञ गर्दछौँ, दान गर्छौँ र मोजमस्ती गर्दछौँ। यसकिसिमले ती अज्ञानले मोहित भएर मनमा इच्छा गरिरहन्छन्॥ १३—१५॥

**यस्तो मानिस मरेपछि उसको गति कस्तो हुन्छ नि?**

विभिन्न किसिमका भ्रममा परेका, मोहजालमा अल्झिएका तथा पदार्थहरूको सङ्ग्रह र भोगमा आसक्त भएका मानिस भयङ्कर

नर्कहरूमा पर्दछन्॥ १६॥

**भोगमा आसक्त भएका ती आसुरी सम्पत्ति हुने मानिसको पतन गर्ने भाव कुन—कुन हुन्?**

ती आफैँलाई पूज्य ठान्ने, जिद्धी गर्ने र धन एवम् मनको मदमा चूर रहने खालका हुन्छन्।

**यस्ता मानिसले शुभकर्म पनि त गर्न सक्दछन् नि, भगवान्?**

सक्छन्, तिनले यज्ञ आदि शुभकर्म गर्न त गर्दछन्, तर दम्भ (देखावटी) र विधिहीन तरिकाले नाममात्रका लागि गर्दछन्॥ १७॥

**तिनले यसो किन गर्दछन्?**

किनकि तिनले अहंकार, हठ, घमण्ड, काम र क्रोधको सहारा लिएका हुन्छन्।

**उनीहरूका अन्य भाव कस्ता हुन्छन्, भगवान्?**

तिनले आफ्नो र अर्काको शरीरमा रहने म अन्तर्यामीसित द्वेष गर्दछन् भने मेरा र अर्काका गुणमा दोषदृष्टि राख्दछन्॥ १८॥

**यस्ता आसुरी भावहरूको परिणाम के हुन्छ, भगवान्?**

ती द्वेष गर्ने, क्रूर स्वभाववाला र संसारमा महान् नीच र अपवित्र मनुष्यलाई मैले पटक—पटक कुकुर, गधा, बाघ, काग, उल्लु, गिद्ध, सर्प र बिच्छी आदि आसुरी योनिहरूमा खसालीदिन्छु॥ १९॥

**त्यसपछि के हुन्छ नि भगवान्?**

के कुन्तीनन्दन! ती मूढ मनुष्यले मलाई प्राप्त नगरी जन्मजन्मान्तरसम्म आसुरी योनिहरूलाई नै प्राप्त गर्दछन् भने तीभन्दा पनि अधम गतिमा अर्थात् भयङ्कर नर्कमा जान्छन्॥ २०॥

**उनीहरू अधम गति ( नर्क ) एवम् योनिमा जाने मूल कारण के हो भगवान्?**

काम, क्रोध र लोभ—यी तीन प्रकारका नर्कका ढोका मानिसलाई पतन गर्ने खालका छन्। यसैले, यी तीनलाई त्यागिदिनुपर्दछ॥ २१ ॥

**तिनलाई त्यागेपछि के हुन्छ नि?**

हे कौन्तेय! जुन मानिस नर्कका यी तीनै द्वारमुक्त भएर आफ्नो कल्याणको आचरण गर्दछ, अर्थात् जसले शास्त्रनिषिद्ध आचरण त्यागेर केवल आफ्नै कल्याणको उद्देश्यले निष्कामभावले विहित आचरण गर्दछ, उसले परमगतिलाई प्राप्त गर्दछ॥ २२ ॥

**परमगतिको प्राप्ति कसलाई हुँदैन?**

जसले शास्त्रविधिलाई त्यागेर आफ्नो इच्छाले मनोमानी आचरण गर्दछ, अर्थात् आफ्नो मनले जुन कामलाई राम्रो मान्दछ, त्यही गर्दछ र जुन राम्रो मान्दैन, त्यो गर्दैन, त्यस्तो मानिसलाई न त सिद्धि (अन्तःकरणको शुद्धि) प्राप्त हुन्छ, न सुख प्राप्त हुन्छ, न परमगति नै प्राप्त हुन्छ॥ २३ ॥

**राम्रो र नराम्रो कामको पहिचान कसरी गर्ने प्रभो?**

कर्तव्य र अकर्तव्यका विषयमा शास्त्र नै प्रमाण हो भन्ने जानेर तिमीले शास्त्रविधिले निश्चित गरेका कर्तव्यकर्म नै गर्नुपर्दछ, अर्थात् शास्त्रलाई अगाडि राखेर नै हरेक काम गर्नुपर्दछ॥ २४ ॥

॥ श्रीपरमात्मने नमः ॥

# सत्रौँ अध्याय

**अर्जुनले भने—हे कृष्ण! जसले शास्त्रविधिलाई नजानेर श्रद्धासाथ पूजन—यजन गर्दछन्, उनीहरूको श्रद्धा सात्त्विकी हुन्छ अथवा राजसी र तामसी?॥ १ ॥**

भगवान्‌ले भन्नुभयो—मानिसको स्वभावबाटै उत्पन्न हुने श्रद्धा सात्त्विकी, राजसी तामसी गरी तीन प्रकारका हुन्छन्॥ २॥

**ती स्वाभाविक श्रद्धा किन तीन किसिमका हुन्छन्?**

हे भारत! सबै मानिसका श्रद्धा उनीहरूका अन्तःकरणअनुरूप हुन्छन्। मानिस श्रद्धामय छ। यसर्थ, जो जस्तो श्रद्धाले युक्त छ, त्यसको रूप त्यस्तै हुन्छ,अर्थात् उसको निष्ठा (स्थिति) पनि त्यस्तै हुन्छ॥ ३॥

**त्यो श्रद्धालाई कसरी चिन्ने नि?**

सात्त्विक मनुष्यले देवताहरूको पूजन गर्दछन्। राजसी मानिसले यक्ष—राक्षसहरूको र तामसले भूतप्रेतको पूजा गर्दछन्॥ ४॥

**अश्रद्धालु मानिसको पहिचान के हो त भगवान्?**

अश्रद्धालु मानिस दम्भ, अहङ्कार, कामना, आसक्ति र हठले युक्त भएर शास्त्रविधिले रहित घोर तपस्या गर्दछन् भने आफ्नो पाञ्चभौतिक शरीरलाई तथा (मभन्दा विरुद्ध हिँडेर) अन्तःकरणमा स्थित मलाई पनि कष्ट दिन्छन्। यस्ता अज्ञानी मनुष्यलाई तिमीले आसुरी स्वभावयुक्त जान॥ ५–६ ॥

**यहाँसम्म हजुरले पूजन र तपले श्रद्धालु एवम् अश्रद्धालु मानिसको पहिचान बताउनुभयो, तर जसले पूजन, तप आदि**

**गर्दैनन्, उनीहरूको पहिचान कसरी हुन्छ त?**

भोजनप्रतिको रुचिले उनीहरूलाई चिन्न सकिन्छ, किनकि भोजन त सबैले गर्दछन्, अतः आहार पनि तीन किसिमले सबैलाई प्रिय हुन्छ। यस्तै यज्ञ, तप र दान पनि तीन प्रकारले प्रिय हुन्छन् भन्ने भेद तिमीले थाहा पाऊ॥ ७॥

**सात्त्विक मनुष्यको रुचि कस्तो आहारमा हुन्छ?**

आयु, सत्त्वगुण, बल, आरोग्य, सुख र प्रसन्नता वृद्धि गर्ने, स्थिर रहने, हृदयलाई बल प्रदान गर्ने, रसयुक्त चिल्लो भोजनका पदार्थहरू सात्त्विक मनुष्यलाई प्रिय हुन्छन्॥ ८॥

**राजसी मनुष्यको रुचि कस्ता आहारमा हुन्छ नि?**

धेरै कडा, अमिलो, नुन भएको, तातो, तिख्खर, सुख्खा र दाहकारक भोजनका पदार्थ राजसी मनुष्यलाई प्रिय हुन्छन्, जुन दुःख, शोक र रोग प्रदान गर्ने खालका हुन्छन्॥ ९॥

**तामसी मनुष्यको रुचि चाहिँ कस्ता खालका आहारमा हुन्छ त प्रभो?**

आधापाकेको, रसहीन, दुर्गन्धित (मदिरा, प्याज, लसुन आदि),बासी, जुठो र एकदमै अपवित्र(मासु, माछा, अण्डा आदि) भोजनका पदार्थहरू तामसी मनुष्यका लागि प्रिय हुन्छन्॥-१०॥

**भर्खरै हजुरले यज्ञ, तप र दानका पनि तीन भेद सुन्ने आज्ञा**

---

* पहिला यजन—पूजन र भोजनद्वारा जुन श्रद्धाको पहिचान बताइयो, तिनलाई शास्त्रविधिको अज्ञानवश त्याग गर्नेको त पहिचान हुन्छ नै, तर जसले शास्त्रविधिअनुसार यज्ञ आदि शुभ कर्म गर्दछन्, उनीहरूको पहिचान कसरी गर्ने भन्ने बताउनका लागि भगवान्‌ले यज्ञ, तप र दानका तीन भेद सुन्ने आज्ञा दिनुभयो।

**दिनुभएको थियो*। अतः अब कसरी यज्ञ तीन प्रकारका हुन्छन्, ती बताउनुस्।**

यज्ञ गर्नु कर्तव्य हो भन्दै मनलाई सन्तुष्ट तुल्याएर फलको इच्छाले रहित भएको मानिसद्वारा शास्त्रविधिअनुसार जुन यज्ञ गरिन्छ, त्यो सात्त्विक हुन्छ॥ ११ ॥

**राजस यज्ञ कस्तो हुन्छ, भगवान्?**

हे भरतश्रेष्ठ अर्जुन! जुन यज्ञलाई फलको इच्छाले अर्थात् आफ्नो स्वार्थका लागि गरिन्छ, अथवा केवल मानिसलाई देखाउनका लागि गरिन्छ, त्यसलाई तिमीले राजसी यज्ञ ठान॥ १२ ॥

**तामस यज्ञ चाहिँ कस्तो हुन्छ नि?**

जुन यज्ञ शास्त्रविधिविना, अन्नदानले रहित, विनामन्त्र, विनादक्षिणा र विनाश्रद्धा गरिन्छ, त्यो तामस यज्ञ मानिन्छ॥ १३ ॥

**भगवान्! अब तप कति प्रकारका हुन्छन्? ती बताउनुस्।**

तप तीन प्रकारका हुन्छन्—शरीरको, वाणीको र मनको। देवता, ब्राह्मण, गुरूजन र जीवन्मुक्त महापुरूषहरूको पूजन गर्नु; पानी, माटो आदिले शरीरलाई पवित्र राख्नु, शारीरिक क्रियाहरूलाई सीधा र सरल राख्नु अर्थात् जटिल नबनाउनु, ब्रह्मचर्यको पालन गर्नु र शरीरले कसैलाई पनि कुनै किसिमको कष्ट नदिनु, यो शरीरको तप हो॥ १४ ॥

**वाणीको तप कस्तो हुन्छ नि?**

उद्वेग नगर्नु, सत्य, प्रिय र हितकारक वचन बोल्नु, स्वाध्याय गर्नु र अभ्यास (नाम जप) गर्नु—यो वाणीको तप हो॥ १५ ॥

**मनको तप चाहिँ कस्तो हुन्छ?**

मनको प्रसन्नता, सौम्य भाव, मननशीलता, मनको निग्रह र

भावहरूमा शुद्धि—यो मनको तप हो॥ १६॥

उपर्युक्त तीन प्रकारका तप यदि परम श्रद्धायुक्त फलको इच्छाले रहित मनुष्यद्वारा गरिन्छ भने त्यो तप सात्त्विक हुन्छ॥ १७॥

**राजस तप कस्तो हुन्छ?**

जुन तप आफ्नो सत्कार, मान र पूजाका लागि अथवा अर्कालाई देखाउनका लागि गरिन्छ, त्यो यस लोकमा अनिश्चित र नाशवान् खालको फल दिने तप राजसी हुन्छ॥ १८॥

**तामस तप कस्तो हुन्छ, प्रभो?**

जुन तप मूर्खतापूर्वक हठले आफूलाई पीडा दिएर अथवा अरूलाई कष्ट दिनका लागि गरिन्छ, त्यो तामस तप हुन्छ॥ १९॥

**भगवान्, अब तीन प्रकारका दानको बारेमा बताउनुस्।**

दान दिनु कर्तव्य हो भन्ने भावले जुन दान प्रत्युपकारको भावनाले रहित भएर देश, काल र सुपात्र प्राप्त भएपछि दिइन्छ, त्यो दान सात्त्विक हुन्छ॥ २०॥

**राजसी दान कस्तो हुन्छ?**

जुन दान प्रत्युपकार प्राप्तिका लागि अथवा फलको इच्छा राखेर 'दिनु परेको छ' भन्दै दुःखपूर्वक दिइन्छ, त्यो दान राजसी दान हुन जान्छ॥ २१॥

**तामसी दान कस्तो हुन्छ?**

जुन दान विनासत्कार तथा अवज्ञापूर्वक अयोग्य देश र कालमा कुपात्रलाई दिइन्छ, त्यो दान तामसी दान हुन्छ॥ २२॥

**श्रद्धालु मानिसले शास्त्रविहित यज्ञ, तप र दानका क्रियाहरूलाई कसरी सुरू गर्ने, भगवान्?**

ॐ, तत् र सत्—यी तीनै नामले जुन परमात्मालाई निर्देश

गरेका छन्, उनै परमात्माले सृष्टिको सुरूमा वेद, ब्रह्मण र यज्ञहरूको रचना गरेका हुन्। अतः परमात्माको नाम लिएर नै यज्ञादि क्रियाहरू सुरु गर्नुपर्दछ॥ २३॥

**'ॐ' को प्रयोग कहाँ हुन्छ, भगवान्?**

वैदिक सिद्धान्तलाई मान्ने मानिसले शास्त्रविधिले युक्त यज्ञ, दान र तपरूपी क्रियाहरू सधैँ 'ॐ' को उच्चारण गरेर नै सुरू गरिन्छन्॥ २४॥

**'तत्' को प्रयोग कहाँ हुन्छ नि?**

'तत्' नामले पुकारिने परमात्माका लागि नै सबैथोक हो भन्ने मानेर मुक्ति चाहने मनुष्यहरूद्वारा फलको इच्छाले रहित भएर अनेक प्रकारका यज्ञ, तप र दानरूपी क्रियाहरू गरिन्छन्॥ २५॥

**'सत्' को प्रयोग कहाँ हुन्छ नि?**

हे पार्थ! परमात्माको 'सत्' नामको प्रयोग सत्तामात्रमा र श्रेष्ठ भावमा गरिन्छ। प्रशंसनीय(श्रेष्ठ) कर्मका साथमा पनि 'सत्' शब्द जोडिन्छ। यज्ञ, तप र दानप्रति मनुष्यको जुन स्थिति (निष्ठा, श्रद्धा) हुन्छ, त्यसलाई पनि 'सत्' भनेर भनिन्छ। कतिसम्म भनौँ, त्यस परमात्माका लागि जुन कर्म गरिन्छ, त्यो सबै 'सत्' हो॥ २६-२७॥

**'असत्' कर्म भनेर कस्तालाई भनिन्छ त?**

हे पार्थ! अश्रद्धासाथ गरिएको हवन, दिएको दान र तपिएको तपसहित अरु पनि जे गरिन्छ, ती सबै 'असत्' मानिन्छन्। तिनको फल न यहाँ हुन्छ, न त मरेपछि नै हुन्छ, अर्थात् तिनको फल कतै पनि पाइन्न॥ २८॥

॥ श्रीपरमात्मने नमः ॥

# अठारौँ अध्याय

**अर्जुनले भने— हे महाबाहो! हे अन्तर्यामिन्! हे केशिनिषूदन! मैले सन्न्यास ( साङ्ख्ययोग ) र त्याग ( कर्मयोग ) को रहस्य फरक फरक जान्न चाहन्छु॥ १ ॥**

भगवान्‌ले भन्नुभयो—मैले सन्न्यास र त्यागका विषयमा अन्य दार्शनिकका चार मत बताउँछु।

**ती चार मत केके हुन्, प्रभो ?**

१–कति विद्वान्‌ले काम्य कर्महरूको त्यागलाई सन्न्यास भन्दछन्।

२–कतिले सम्पूर्ण कर्महरूका फलको त्यागलाई त्याग भन्दछन्।

३–कति विद्वान्‌ले कर्मलाई दोषहरूलाई जस्तै छोडिदिनुपर्दछ भनेर भन्दछन्।

४–कतिले यज्ञ, दान र तपरूपी कर्महरूलाई त्याग्नुहुँदैन भनेर भन्दछन्॥ २—३ ॥

**यी त दार्शनिकका चार मत भए, तर यस विषयमा हजुरको मत के छ ?**

हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन! सन्न्यास र त्याग—यी दुईमध्ये पहिला तिमीले त्यागका विषयमा मेरो विचार सुन, किनकि हे पुरूश्रेष्ठ! त्याग तीन प्रकारका बताइएको छ। यज्ञ,

दान र तपरूप कर्महरूको त्याग गर्न हुँदैन, तर तिनलाई नगर्ने हो भने अवश्य गर्नुपर्दछ, किनकि तीमध्ये एकएक कर्मले मनीषिहरूलाई पवित्र तुल्याउँछन्॥ ४–५ ॥

**बस, यति मात्रै कर्म गर्ने हो र?**

हे पार्थ! अहिले भनिएका यज्ञ, दान र तपरूपी कर्महरू र यीबाहेक अन्य शास्त्रविहित कर्महरूको आसक्ति र फलको इच्छा त्यागेर गर्नुपर्दछ भन्ने मैले निश्चित गरेको उत्तम मत हो॥ ६ ॥

**जुन तीन किसिमका त्याग बताइएको छ, तिनको स्वरूप कस्तो छ भगवान्?**

निर्धारित कर्महरू त्याग्नु कसैका लागि पनि उचित हुँदैन*। मोहका कारण यिनलाई त्याग्नु तामस त्याग हो॥ ७ ॥

**राजस त्यागको स्वरूप कस्तो छ नि प्रभो?**

कर्तव्यकर्म गर्नुमा केवल दुःख नै छ भन्ने सम्झिएर शारीरिक क्लेशको भयले कर्महरूलाई त्याग्नु राजस त्याग हो। यस्तो त्याग गर्नेलाई त्यागको फलका रूपमा शान्ति प्राप्त हुँदैन॥ ८ ॥

**सात्त्विक त्यागको रूप कस्तो हुन्छ नि?**

---

* विहित कर्म र नियत कर्ममा के फरक छ? शास्त्रले जुन कर्मलाई गर्ने आज्ञा दियो, ती सबै विहित कर्म हुन। ती सम्पूर्ण विहित कर्मको पालन एउटा व्यक्तिले गर्नै सक्दैन; किनभने शास्त्रहरूमा सम्पूर्ण वार र तिथिहरूको व्रतको विधान आउँछ। यदि एउटै मान्छेले सबै वार क तिथिहरूमा व्रत गर्छ भने भोजन कहिले गर्छ? यस बाट सिद्ध भयो कि मनुष्यका लागि सबै विहित कर्म लागु हुँदैनन्। परन्तु ती विहित कर्ममा पनि वर्ण, आश्रम र परिस्थितिअनुसार जसलाई जुन कर्तव्य आवश्यक छ, उसका लागि त्यो 'नियत कर्म' हो। जस्तै ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र—चारै वर्णमा जुनजुन वर्णका लागि जीविका र शरीर निर्वाहसम्बन्धी जति पनि नियम छन्, ती ती वर्णका लागि ती सबै 'नियत कर्म हुन्।'

हे अर्जुन! निर्धारित कर्म गर्नु मानिसको कर्तव्य हो भनेर कर्महरूको आसक्ति र फलको इच्छा त्यागेर निर्धारित कर्म गर्नु सात्त्विक त्याग हो॥ ९॥

**त्याग गर्ने मानिस कस्तो हुन्छ, भगवान्?**

उसले सकाम र निषिद्ध कर्महरूको त्याग त गर्छ, तर द्वेषपूर्वक होइन र शास्त्रनियत कर्तव्यकर्महरूको आचरण त गर्दछ, तर रागपूर्वक होइन। यस्तो बुद्धिमान् त्यागी मानिस सन्देहरहित भएर आफ्नो स्वरूपमा स्थित रहन्छ॥ १०॥

**कर्महरू गर्नुमा राग नहोस् र छोड्नुमा द्वेष नहोस् भन्ने झन्झट किन गर्ने? कर्मको सर्वथा त्याग गरिदिए हुँदैन र?**

देहधारी मनुष्यद्वारा कर्महरूको सम्पूर्ण त्याग हुन सक्दैन। यसर्थ, जसले कर्महरूको फलको त्याग गर्दछ, उही त्यागी मानिन्छ॥ ११॥

**कर्मफल कति किसिमको हुन्छ, भगवान्?**

कर्मफल तीन किसिमको हुन्छ—अनुकूल परिस्थिति आउनु इष्ट हो, प्रतिकूल परिस्थिति आउनु अनिष्ट हो भने जसमा कुनै कुरा इष्टको र कुनै कुरा अनिष्टको हुन्छ, त्यो मिश्र हो। यी तीनै प्रकारका कर्मफल कर्मफलको इच्छा राखेर कर्म गर्नेहरूलाई मरेपछि पनि प्राप्त हुन्छ, तर फको इच्छा त्याग्नेहरूलाई कहीँ पनि हुँदैन॥

**जुन कर्मका फल तीन किसिमका हुन्छन्, ती कर्म हुनुको कारण के हो?**

हे महाबाहो! कर्महरूको अन्त गर्ने साङ्ख्य—सिद्धान्तहरूमा सम्पूर्ण कर्म सिद्ध हुनुमा पाँच हेतु बताइएका छन्, यिनलाई तिमीले मबाट बुझ॥ १२-१३॥

शरीर, कर्ता, अनेक किसिमका करण र तिनका विभिन्न प्रकारका फरक फरक चेष्टा तथा संस्कार—यी पाँच हेतु हुन्। मानिस शरीर, वाणी र मनद्वारा शास्त्रविहित अथवा शास्त्र-निषिद्ध जेजस्ता कर्म आरम्भ गर्दछ, उसका यी पाँचै हेतु हुन्छन्॥ १४-१५ ॥

**कर्म हुनुमा यी पाँच हेतुलाई बताउनुको कारण के हो?**

कर्म त शरीर, वाणी र मनले नै हुन्छन्, आत्मामा कर्तापन हुँदैन। तर, जसले कर्मका विषयमा आत्मालाई कर्ता मान्दछ, त्यस दुर्मतिले राम्ररी बुझ्दैन, किनकि उसको बुद्धि शुद्ध हुँदैन॥ १६ ॥

**आत्मालाई अकर्ता मान्नाले के हुन्छ, भगवान्?**

जसमा 'म गर्दछु' भन्ने अहङ्कृत भाव हुँदैन र जसको बुद्धि कर्महरूका फलमा लिप्त हुँदैन, उसले सम्पूर्ण प्राणीहरूलाई मारेर पनि न त मार्दछ, न त बाँधिन्छ नै॥ १७ ॥

**यदि कर्महरूका साथमा आत्माको सम्बन्ध छैन भने कर्म फेरि कसको प्रेरणाले हुन्छ त?**

ज्ञान, ज्ञेय र परिज्ञाता—यी तीनबाट कर्मप्रेरणा हुन्छ भने करण, कर्म र कर्ता—यी तीनबाट कर्मसङ्ग्रह हुन्छ॥ १८ ॥

**कर्मप्रेरणा र कर्मसङ्ग्रहमा मुख्य कुन हुन् र तिनका खास भेद के हुन्, भगवान्?**

गुणहरूका सम्बन्धले प्रत्येक पदार्थका भिन्नभिन्न भेदहरूको गणना गर्ने शास्त्रहरूमा गुणहरूका अनुसार ज्ञान, कर्म र कर्ताका तीन तीन मूल भेद बताइएका छन्, तिनलाई पनि तिमीले राम्ररी सुन॥ १९ ॥

**ज्ञानका तीन भेदहरूमध्ये सात्त्विक ज्ञान कुन चाहिँ हो?**

जुन ज्ञानले साधक सम्पूर्ण विभक्त प्राणीहरूमा विभागरहित एक अविनाशी सत्तालाई देख्दछ, त्यो ज्ञान सात्त्विक हो॥ २०॥

**राजस ज्ञान कुन चाहिँ हो, भगवान्?**

जुन ज्ञानले मानिसले अलग अलग प्राणीहरूमा भाव (सत्ता) पनि अलग अलग देख्दछ, त्यो ज्ञान राजस हो॥ २१॥

**तामस ज्ञान चाहिँ कुन हो, प्रभो?**

जुन उत्पन्न हुने शरीरमा नै पूर्णरूपेण आसक्त हुन्छ र जुन युक्तिसङ्गत छैन, तात्त्विक ज्ञानले रहित र तुच्छ छ, त्यो ज्ञान तामस हो॥ २२॥

**तीन प्रकारका कर्ममध्ये सात्त्विक कर्म कुन चाहिँ हो, भगवान्?**

जुन निर्धारित कर्म फलको इच्छारहित मनुष्यद्वारा रागद्वेष र कर्तृत्वअभिमानले रहित भएर गरिन्छ, त्यो सात्त्विक हो॥ २३॥

**राजस कर्म कुन चाहिँ हो?**

जुन कर्म भोगहरूको इच्छा गर्ने मानिसद्वारा अहङ्कार अथवा परिश्रमपूर्वक गरिन्छ, त्यो राजसी कर्म हो॥ २४॥

**तामस कर्म कुन चाहिँ हो नि, प्रभो?**

जुन कर्म परिणाम, हानि, हिंसा र आफ्नो सामर्थ्यलाई विचार नगरी मोहपूर्वक आरम्भ गरिन्छ, त्यो तामस हो॥ २५॥

**तीन प्रकारका कर्ताहरूमध्ये सात्त्विक कर्ता कुन हो, भगवान्?**

जुन कर्ता आसक्तिरहित, अहङ्काररहित, धैर्य र उत्साहले युक्त तथा कर्महरूको सिद्धि—असिद्धिमा निर्विकार रहन्छ, ऊ सात्त्विक कर्ता हो॥ २६॥

**राजस कर्ता कुन चाहिँ हो?**

जुन कर्ता रागी, कर्मफलको इच्छा भएको, लोभी, हिंसाको स्वभाव भएको, अशुद्ध र हर्षशोकले युक्त छ, त्यो राजसी हो ॥ २७ ॥

**तामस कर्ता चाहिँ कुन हो नि प्रभो?**

जुन कर्ता असावधान, कर्तव्य—अकर्तव्यको शिक्षाले रहित, जटिल, जिद्दी, कृतघ्न, अल्छी, विषादी र दीर्घसूत्री (थोरै समयको कामलाई धेरै समय लगाउने) छ, ऊ तामसी हो ॥ २८ ॥

**ज्ञान, कर्म र कर्ताका तीन—तीन भेद त हजुरले बताइदिनु भयो, अब यीबाहेक अरू कुनकुन भेद जान्न आवश्यक छ, प्रभो?**

हे धनञ्जय! कर्म सङ्ग्राहक करणहरूमा बुद्धि र धृति(धारणा शक्ति) मुख्य छन्, जसका भेदलाइ जान्न निकै आवश्यक छ। अतः अब तिमी गुणअनुसार बुद्धि र धृतिका पनि तीन प्रकारका भेद अलग अलगरूपले सुन, जसलाई मैले पूर्णरूपले भन्दछु। हे पृथानन्दन! जुन बुद्धिले प्रवृत्ति र निवृत्तिलाई, कर्तव्य र अकर्तव्यलाई, भय र अभयलाई एवम् बन्धन र मोक्षलाई राम्ररी जान्दछ, त्यो सात्त्विकी हो ॥ २९—३० ॥

**राजसी बुद्धि कस्तो हुन्छ?**

हे पार्थ! जुन बुद्धिले धर्म र अधर्मलाई, कर्तव्य र अकर्तव्यलाई पनि ठीक ढङ्गले जान्दैन, त्यो राजसी हो ॥ ३१ ॥

**तामसी बुद्धि के हो?**

हे पृथानन्दन! तमोगुणले घेरिएको जुन बुद्धिले धर्मलाई अधर्म र अधर्मलाई धर्म एवम् सबै कुरालाई उल्टो मान्दछ, त्यो बुद्धि तामसी बुद्धि हो ॥ ३२ ॥

**सात्त्विकी धृति कुन चाहिँ हो, भगवान्?**

हे पार्थ! समताले युक्त जुन अव्यभिचारिणी धृतिद्वारा मनुष्यले मन, प्राण र इन्द्रियका क्रियालाई धारण गर्दछ, त्यो धृति सात्त्विकी हो॥ ३३॥

**राजसी धृति कुन चाहिँ हो, भगवान्?**

हे पृथानन्दन! फल चाहने मानिस जुन धृतिले धर्म, अर्थ र काम (भोग) लाई अत्यन्त आसक्तिका साथ धारण गर्दछ, त्यो धृति राजसी हो॥ ३४॥

**तामसी धृति कस्तो हुन्छ?**

हे पार्थ! दुष्ट बुद्धिवाला मनुष्य जुन धृतिले निद्रा, भय, शोक (चिन्ता), विषाद (दु:ख) र मद (घमण्ड) लाई पनि छोड्दैन, त्यो धृति तामसी हो॥ ३५॥

**तामस पुरूषले निद्रा आदिलाई किन छोड्दैन?**

यिनीहरूका कारण सुख प्राप्त हुनाले छोड्दैन।

**त्यो सुख के हो भगवान्?**

हे भरतर्षभ! त्यस सुखका पनि तीन भेद तिमीले मबाट सुन। जुन सुखमा अभ्यासले रमण हुन्छ र जसबाट दु:खको अन्त हुन्छ, त्यस्तो परमात्मा विषयक बुद्धिको प्रसन्नताबाट पैदा हुने जुन सुख सांसारिक आसक्तिका कारण आरम्भमा विषजस्तो र परिणाममा अमृतजस्तो हुन्छ, त्यो सात्त्विक सुख हो॥ ३६-३७॥

**राजसी सुख कुन चाहिँ हो नि?**

जुन सुख इन्द्रियद्वारा विषयका सम्बन्धले सुरूमा अमृतको जस्तो र परिणाममा विषको जस्तो हुन्छ, त्यो राजसी सुख हो॥ ३८॥

**तामस सुख कस्तो हुन्छ, प्रभो?**

निद्रा, आलस्य र प्रमादले उत्पन्न हुने जुन सुख सुरूमा र

परिणाममा पनि स्वयंलाई मोहित गर्ने खालको हुन्छ, त्यो तामस सुख हो॥ ३९॥

**भगवान्! अब तीनै गुणलाई लिएर अन्यय कुनकुन वस्तुका तीन—तीन भेद हुन्छन्, ती बताउनुस्।**

बाबु! पृथ्वीमा, स्वर्गमा, देवताहरूमा र यीबाहेक अन्य कतै पनि यस्ता कुनै पनि वस्तु, पदार्थ आदि छैनन्, जुन प्रकृतिबाट उत्पन्न यी तीनै गुणहरूले रहित होऊन्, अर्थात् सम्पूर्ण त्रिलोक तीनै गुणहरूमा छ॥ ४०॥

**यी गुणहरूबाट छुट्ने उपाय के छ भगवान्?**

हे परंतप! यस संसारमा ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र—यी चारै वर्णहरूको विभाग मनुष्यको स्वभावबाट उत्पन्न भएका गुणअनुसार नै गरिएको छ। अतः आ—आफ्ना वर्णअनुसार निर्धारित कर्म गर्नु नै गुणहरूबाट छुट्ने उपाय हो॥ ४१॥

**ब्राह्मणका कर्म कुनकुन हुन्, भगवान्?**

१. मनको निग्रह गर्नु, २. इन्द्रियलाई वशमा गर्नु, ३. धर्म-पालनाका लागि कष्ट सहनु, ४. भित्रबाहिरबाट शुद्ध रहनु ५. अर्काका अपराधलाई क्षमा गर्नु, ६. शरीर, मन आदिमा सरलता राख्नु, ७. वेद, शास्त्र आदिको ज्ञान सम्पादन गर्नु, ८. यज्ञविधिलाई अनुभवमा ल्याउनु र ९. परमात्मा, वेद आदिमा आस्तिकभाव राख्नु—यी ब्राह्मणका स्वाभाविक कर्म हुन्॥ ४२॥

**क्षत्रियका कर्म केके हुन् नि?**

१. शूरवीरता, २. तेज, ३. धैर्य, ४. प्रजाको सञ्चालन आदिमा विशेष चतुरता, ५. युद्धमा कहिल्यै पछि नहट्नु, ६. दान दिनु र ७. शासन गर्ने भाव—यी क्षत्रियका स्वाभाविक कर्म हुन्॥ ४३॥

**वैश्यका कर्म केके हुन् नि ?**

१. खेती गर्नु, २. गाईको रक्षा गर्नु र ३. शुद्ध व्यापार गर्नु— यी वैश्यका स्वाभाविक कर्म हुन्।

**शूद्रका कर्म चाहिँ कस्ता हुन्छन्, प्रभो ?**

चारै वर्णको सेवा गर्नु शूद्रको स्वाभाविक कर्म हो॥ ४४॥

**आआफ्ना स्वाभाविक कर्महरूलाई गर्नाले के हुन्छ, भगवान् ?**

आआफ्ना स्वाभाविक कर्ममा निष्कामभावले तत्परतासाथ लागेको मानिसले परमात्मालाई प्राप्त गर्दछ। आफ्नो स्वाभाविक कर्ममा लागेको मानिसले जसरी परमात्मालाई प्राप्त गर्दछ, त्यससलाई तिमीले मबाट सुन॥ ४५॥

जुन परमात्माबाट सम्पूर्ण संसार पैदा भएको छ र जसबाट यो सम्पूर्ण संसार व्याप्त छ, त्यस परमात्मालाई आफ्नो कर्मद्वारा पूजा गरेर मानिसले सिद्धि (परमात्मा) लाई प्राप्त गर्दछ॥ ४६॥

**आफ्नै कर्मको अनुष्ठान किन गर्ने भगवान् ?**

बाबु ! जुन आफ्ना लागि निषेध गरिएको छ, तर त्यसमा धेरै गुण छन्, यस्तो गुणयुक्त परधर्मभन्दा आफ्नै दोषयुक्त धर्म (स्वाभाविक) श्रेष्ठ छ, किनकि स्वभावैले निर्धारित गरिएको स्वधर्मरूपी कर्मलाई सम्पन्न गर्ने मानिस पापको भागी हुँदैन। हे कुन्तीनन्दन ! दोषयुक्त भएर पनि आफ्नो धर्मको त्याग गर्नुहुँदैन, किनकि जसरी आगो बाल्दा सुरुमा धुवाँ हुन्छ, त्यसैगरी प्रत्येक कर्मको सुरूआतमा कुनै न कुनै दोष त हुन्छ नै॥ ४७—४८॥

**कर्महरूको आंशिक दोष पनि नलागोस् भन्नका लागि यस्तो कुनै अर्को पनि उपाय छ र भगवान् ?**

छ, साङ्ख्ययोग हो। जसको बुद्धि सबैतिर सर्वथा आसक्तिरहित

हुन्छ, जसको शरीर वशमा हुन्छ र जसलाई कुनै पनि वस्तु आदिको थोरै मात्र पनि चिन्ता छैन, यस्तो मानिसले साङ्ख्ययोगद्वारा नैष्कर्म्य—सिद्धि(ब्रह्म)लाई प्राप्त गर्दछ, अर्थात् उसका सबै कर्म अकर्म हुन्छन् भने उसलाई कर्महरूको आंशिक दोष पनि लाग्दैन॥ ४९ ॥

**त्यस नैष्कर्म्यसिद्धिलाई प्राप्त गर्ने क्रम कस्तो छ नि?**

अन्तःकरणको शुद्धिरूपी सिद्धिलाई प्राप्त गरेको मानिसले ब्रह्मलाई, जुन ज्ञानको पराकाष्ठा हो, जुन क्रमैसित प्राप्त हुन्छ, त्यस क्रमलाई तिमीले मबाट क्रमैसित बुझ। जो सात्त्विकी बुद्धिले युक्त वैराग्यमा आश्रित, एकान्तमा रहने स्वभावको र नियमित भोजन गर्नेवाला साधक धैर्यसाथ इन्द्रियहरूलाई नियन्त्रित गरेर, शरीर—वाणी—मनलाई वशमा राख्दै, शब्दादि विषय त्यागेर राग—द्वेष छोडेर निरन्तर परमात्माको ध्यानमा लागिरहन्छ, ऊ अहङ्कार, हठ, घमण्ड, काम, क्रोध र परिग्रह(भोगबुद्धिले वस्तुहरूको सङ्ग्रह) लाई त्यागेर एवम् ममतारहित एवम् शान्त भएर ब्रह्मप्राप्तिको पात्र बन्न पुग्छ॥ ५०—५३ ॥

**यस्तो पात्र हुँदा के हुन्छ र?**

त्यस्तो ब्रह्मभूत अवस्थालाई प्राप्त प्रसन्नचित्त साधक न त कसैका लागि शोक गर्दछ, न कसैको इच्छा गर्दछ। उसको सम्पूर्ण प्राणीहरूमा समभाव रहन्छ। यस्तो साधकलाई मेरो पराभक्ति प्राप्त हुन्छ॥ ५४ ॥

**पराभक्ति प्राप्त हुँदा के हुन्छ नि?**

त्यस पराभक्तिले ऊ म जे हुँ र जस्तो हुँ भन्दै तत्त्वपूर्वक मलाई जानेर तत्काल ममा प्रवेश गर्दछ॥ ५५ ॥

**हजुरको प्राप्तिको अरु पनि केही उत्तम उपाय छ कि**

**भगवान्?**

छ नि, निकै उत्तम उपाय छ।

**त्यो के हो, भगवान्?**

जसले अनन्यभावले मेरो आश्रय लिन्छ, सधैँ सबै कर्म गरेर पनि मेरै कृपाले निरन्तर रहने अविनाशी पद प्राप्त गर्दछ॥ ५६ ॥

**त्यसोभए मैले के गर्नुपर्‍यो, भगवान्?**

बाबु! तिमीले केवल ममा आश्रित भएर सम्पूर्ण कर्मलाई चित्तदेखि नै ममा अर्पण गरिदेऊ, अर्थात् सम्पूर्ण कर्म, पदार्थ आदिबाट आफ्नो पन हटाएर समता धारण गरी निरन्तर ममा नै चित्त भएको बन॥ ५७ ॥

**हजुरमा चित्त लागेको बनेर के हुन्छ र?**

ममा मन लागेको बन्दा मेरो कृपाले तिमीले सम्पूर्ण विघ्नबाधाहरू पार गर्न सक्छौ। तर, यदि तिमीले अहङ्कारका कारण मेरो कुरा मानेनौ भने तिम्रो पतन हुन्छ॥ ५८ ॥

**पतन कसरी हुन्छ नि?**

अहङ्कारको आश्रय लिएर तिमीले युद्ध नगर्ने जुन निश्चय गरेका छौ, तिम्रो त्यो निश्चय झुटो हो, किनकि तिम्रो क्षत्रिय स्वभावले तिमीलाई युद्धमा लगाइदिन्छ नै। हे कुन्तीनन्दन! आफ्नो स्वभावजन्य कर्मले बाँधिएका तिमी मोहका कारण जुन युद्ध गर्न चाहँदैनौ, त्यसलाई तिमी क्षात्र स्वभावको वशमा परेर गर्ने छौ॥ ५९—६० ॥

**त्यस क्षात्र स्वभावले कसरी युद्धरूपी कर्म गराउँछ त भगवान्?**

हे अर्जुन! अन्तर्यामी ईश्वर सम्पूर्ण प्राणीका हृदयमा स्थित छ।

उसले आफ्नो मायाले शरीररूपी यन्त्रमाथि आरुढ भएका सम्पूर्ण प्राणीहरूलाई तिनको स्वभावअनुसार घुमाउँछ॥ ६१ ॥

**यस परवशताबाट निस्कने उपाय के छ?**

हे भरतवंशी अर्जुन! तिमी सर्वभावका साथ त्यस अन्तर्यामी ईश्वरको शरणमा जाऊ। उनकै कृपाले तिमीलाई संसारबाट मुक्ति मिल्छ भने अविनाशी परमपदको प्राप्ति हुन्छ। मैले यो गोपनीयभन्दा पनि गोपनीय शरणागतिरूपी ज्ञान तिमीलाई भनिदिएँ। अब तिमी यसमाथि राम्रोसित विचार गरेर जे चाहन्छौ, त्यही गर॥ ६२—६३॥

**मैले त आफ्नो इच्छाबमोजिम केही पनि गर्न चाहन्नँ। भगवान्, हजुरले नै भन्नुस्, म के गरूँ?**

अब तिमीले मेरा यी सम्पूर्ण गोपनीयभन्दा पनि गोपनीय परम वचनलाई फेरि सुन। तिमी मेरा अन्यन्त प्रिय छौ, यसर्थ मैले तिम्रो हितको कुरा गर्दछु॥ ६४॥

**त्यो हितको कुरा के हो, भगवान्?**

तिमी मेरा भक्त बन, मनलाई ममा नै लगाऊ, मेरो पूजन गर र मलाई नै नमस्कार गर। यसो गर्नाले तिमीले मलाई नै प्राप्त गर्दछौ—यो सत्य प्रतिज्ञा मैले तिम्राअगाडि गर्दछु, किनकि तिमी मेरा अत्यन्त प्रिय छौ॥ ६५ ॥

**यदि मैले यसो गर्न सकिनँ भने नि भगवान्?**

सम्पूर्ण धर्मका आश्रयलाई छोडेर तिमी केवल एउटा मेरो शरणमा आऊ। मैले तिमीलाई सम्पूर्ण पापहरूबाट मुक्त गरिदिन्छु। तिमीले चिन्ता नगर॥ ६६ ॥

**यो त हजुरले अत्यन्त विशिष्ट र सुगम कुरा भन्नुभयो, भगवान्! यो कुरा मैले सबैसित भन्न सक्छु त?**

अहँ। यो अत्यन्त गोपनीय कुरा असहिष्णु मानिससित नभन्नू, जो मेरो भक्त छैन, उससित पनि कहिल्यै नभन्नू, जसले यो कुरा सुन्न चाहन्नँ, त्यसलाई पनि नभन्नू र जसले ममाथि दोषदृष्टि राख्दछ, उसलाई पनि नभन्नू॥ ६७॥

**तर यसबाहेक हजुरले जुन कुरा भन्नुभयो, त्यो कोसित भन्ने त?**

मेरा भक्तहरूसित भन्नुपर्दछ। जुन मानिसले मेरो पराभक्तिको उद्देश्यले यस परम गोपनीय गीताग्रन्थलाई मेरा भक्तहरूमा भन्छ, उसले निःसन्देह मलाई नै प्राप्त गर्दछ। त्यति मात्रै होइन, ऊ बराबर मेरो अत्यन्त प्रिय कार्य गर्ने पनि मानिसहरूमा कोही हुँदैन र यस भूमण्डलमा ऊ बराबर मेरो प्रिय पनि कोही हुँदैन॥ ६८—६९॥

**यदि कसैले यस्तो काम गर्न सकेन भने नि?॥**

जसले तिम्रो र मेरो यो धर्ममय संवादको अध्ययन मात्र पनि गर्दछ, उसद्वारा म ज्ञानयज्ञले पूजित हुने छु भन्ने मेरो मत छ॥ ७०॥

**यदि कसैले अध्ययन गर्न सकेन भने नि भगवान्?**

दोषरहित जुन मानिसले केवल श्रद्धासाथ मेरो यस उपेदशलाई सुन्दछ भने पनि ऊ समेत सम्पूर्ण पापहरूबाट मुक्त भएर पुण्यकारीहरूको उच्च लोकलाई प्राप्त गर्दछ॥ ७१॥

हे पार्थ! मैले तिमीसित सोध्न चाहन्छु, के तिमीले यस उपदेशलाई एकाग्रचित्तका साथ सुन्यौ? हे धनञ्जय! के तिम्रो अज्ञानवश उत्पन्न मोह नष्ट भयो?॥ ७२॥

अर्जुनले भने! हे अच्युत! मेरो मोह नष्ट भएको छ भने स्मृति प्राप्त भएको छ, तर यो सबै हजुरकै कृपाले भएको छ, उपदेश

सुनेर होइन। म सन्देहरहित भएर स्थित छु। अब मैले हजुरको आज्ञापालन गर्ने छु॥ ७३ ॥

सञ्जयले भने—हे राजन्! यसप्रकार, मैले भगवान् वासुदेव र महात्मा अर्जुनबीचको यो रोमाञ्चकारी अद्भुत संवाद सुनेँ॥ ७४॥

**यो संवाद तिमीले कसरी सुन्न पायौ त सञ्जय?**

यो अत्यन्त गोपनीय संवाद मैले व्यासजीको कृपाले साक्षात् योगेश्वर भगवान् श्रीकृष्णले भन्दाभन्दै सुनेको छु, परम्पराले होइन॥ ७५ ॥

**यो संवाद सुनेपछि तिमीमाथि कस्तो असर पर्‍यो त सञ्जय?**

हे राजन्! भगवान् श्रीकृष्ण र अर्जुनको यस पवित्र र अद्भुत संवाद याद गरी गरी म बारम्बार हर्षित भइरहेको छु॥ ७६ ॥

**हर्षित हुने अन्य कुनै कारण छ र?**

हे राजन्! भगवान् श्रीकृष्णको त्यस अत्यन्त अद्भुत विराट्‌रूपलाई सम्झिरहँदा मलाई निकै आश्चर्य भइरहेको छ र म बारम्बार हर्षित भइरहेको छु॥ ७७ ॥

**अब तिमी कुन निर्णमा पुग्यौ त, सञ्जय?**

जहाँ योगेश्वर भगवान् कृष्ण हुनुहुन्छ र जहाँ गाण्डीव धनुषधारी अर्जुन छन्, त्यहाँ नै श्री, विजय, विभूति र अचल नीति हुन्छ, यही मेरो निश्चय हो॥ ७८ ॥

नोट—**यस गीता माधुर्यलाई विस्तारमा राम्ररी बुझ्नका लागि जिज्ञासु पाठकले गीताप्रेसबाट प्रकाशित श्रीमद्भगवद्गीताको 'साधक सञ्जीवनी' टीका पढ्नुपर्दछ।**

## 'गीताप्रेस' गोरखपुरकी निजी दूकानें तथा स्टेशन-स्टाल

**डाकद्वारा एवं विदेशोंमें पुस्तकें भेजनेकी व्यवस्था केवल गोरखपुरमें है।**

**gitapressbookshop.in से गीताप्रेस प्रकाशन online खरीदें।**

| | | |
|---|---|---|
| इन्दौर-452001 | जी० 5, श्रीवर्धन, 4 आर. एन. टी. मार्ग | (0731) 2526516, 2511977 |
| ऋषिकेश-249304 | गीताभवन, पो० स्वर्गाश्रम | (0135) 2430122, 2432792 |
| कटक-753009 | भरतिया टावर्स, बादाम बाड़ी | (0671) 2335481 |
| कानपुर-208001 | 24/55, बिरहाना रोड | फोन/फैक्स (0512) 2352351 |
| कोयम्बटूर-641018 | गीताप्रेस मेंशन, 8/1 एम, रेसकोर्स | (0422) 3202521 |
| कोलकाता-700007 | गोबिन्दभवन; 151, महात्मा गाँधी रोड | (033) 40605293, 22680251 |
| गोरखपुर-273005 | गीताप्रेस—पो० गीताप्रेस | (0551) 2334721, 2331250, फैक्स 2336997 |
| चेन्नई-600010 | इलेक्ट्रो हाउस, रामनाथन स्ट्रीट किलपौक | (044) 26615959 ; फैक्स 26615909 |
| जलगाँव-425001 | 7, भीमसिंह मार्केट, रेलवे स्टेशनके पास | (0257) 2226393 ; फैक्स 2220320 |
| दिल्ली-110006 | 2609, नयी सड़क | (011) 23269678; फैक्स 23259140 |
| नागपुर-440002 | श्रीजी कृपा कॉम्प्लेक्स, 851, न्यू इतवारी रोड | (0712) 2734354 |
| पटना-800004 | अशोकराजपथ, महिला अस्पतालके सामने | (0612) 2300325 |
| बेंगलुरु-560027 | 7/3, सेकेण्ड क्रास, लालबाग रोड | (080) 65636566 |
| भीलवाड़ा-311001 | जी 7, आकार टावर, सी ब्लाक, गान्धीनगर | (01482) 248330 |
| मुम्बई-400002 | 282, सामलदास गाँधी मार्ग (प्रिन्सेस स्ट्रीट) | (022) 22030717 |
| राँची-834001 | कार्ट सराय रोड, अपर बाजार, बिड़ला गद्दीके प्रथम तलपर | (0651) 2210685 |
| रायपुर-492009 | मित्तल कॉम्प्लेक्स, गंजपारा, तेलघानी चौक (छत्तीसगढ़) | (0771) 4034430 |
| वाराणसी-221001 | 59/9, नीचीबाग | (0542) 2413551 |
| सूरत-395001 | 2016 वैभव एपार्टमेन्ट, भटार रोड | (0261) 2237362, 2238065 |
| हरिद्वार-249401 | सब्जीमण्डी, मोतीबाजार | (01334) 222657 |
| हैदराबाद-500095 | 41, 4-4-1, दिलशाद प्लाजा, सुल्तान बाजार | (040) 24758311, 66758311 |
| काठमाडौं (नेपाल) | पसल नं० 6,7,8, माधवराज सुमार्गी स्मृति भवन, वनकाली, पशुपति क्षेत्र। e-mail : gitapress.nepal@gmail.com | मोबाइल : 9823490038 |

**स्टेशन-स्टाल—** **दिल्ली** (प्लेटफार्म नं० 5-6); **नयी दिल्ली** (नं० 14-15); **हजरत निजामुद्दीन** [दिल्ली] (नं० 4-5); **कोटा** [राजस्थान] (नं० 1); **बीकानेर** (नं० 1); **गोरखपुर** (नं० 1); **गोण्डा** (नं० 1); **लखनऊ** [एन० ई० रेलवे]; **कानपुर** (नं० 1); **वाराणसी** (नं० 4-5); **मुगलसराय** (नं० 3-4); **इलाहाबाद** (नं० 4-6); **हरिद्वार** (नं० 1); **मथुरा** (नं० 2-3); **झाँसी** (नं० 1); **पटना** (मुख्य प्रवेशद्वार); **राँची** (नं० 1); **धनबाद** (नं० 2-3); **मुजफ्फरपुर** (नं० 1); **समस्तीपुर** (नं० 2); **छपरा** (नं० 1); **सीवान** (नं० 1); **हावड़ा** (नं० 5 तथा 18 दोनोंपर); **कोलकाता** (नं० 1); **सियालदा मेन** (नं० 8); **आसनसोल** (नं० 5); **कटक** (नं० 1); **भुवनेश्वर** (नं० 1); **अहमदाबाद** (नं० 2-3); **राजकोट** (नं० 1); **जामनगर** (नं० 1); **भरुच** (नं० 4-5); **वडोदरा** (नं० 4-5); **इन्दौर** (नं० 5); **जबलपुर** (नं० 6); **औरंगाबाद** [महाराष्ट्र] (नं० 1); **गोंदिया** [महाराष्ट्र] (नं० 1); **सिकन्दराबाद** [आं० प्र०] (नं० 1); **विजयवाड़ा** (नं० 6); **गुवाहाटी** (नं० 1); **खड़गपुर** (नं० 1-2); **रायपुर** [छत्तीसगढ़] (नं० 1); **बिलासपुर** (नं० 1); **रायगढ़** (नं० 1); **बेंगलुरु** (नं० 1); **यशवन्तपुर** (नं० 6); **हुबली** (नं० 1-2); **श्री सत्यसाईं प्रशान्ति निलयम्** [दक्षिण-मध्य रेलवे] (नं० 1)।

**फुटकर पुस्तक-दूकानें—** **चूरू**-ऋषिकुल ब्रह्मचर्याश्रम, पुरानी सड़क, **ऋषिकेश**-मुनिकी रेती; **बेरहामपुर**-म्युनिसिपल मार्केट काम्प्लेक्स, के० एन० रोड, **नडियाड** (गुजरात) संतराम मन्दिर; **चेन्नई**-12, अभिरामी माल, पुरासावलकम, निकट किलपौक/वेपेरी।

**Code 2094▲**